# इस्लाम तथा हिन्दू धर्म

## एक समिक्षात्मक अध्ययन

सोफिया परवीन

प्रकाशक

द मेसेज पब्लिकेशन

घण्टाघर, काठमाडौं ।

# इस्लाम तथा हिन्दू धर्म

## एक समिक्षात्मक अध्ययन

सोफिया परवीन

k|sfzs

**द मेसेज पब्लिकेशन**

घण्टाघर, काठमाडौं ।

पो.ब.नं. २८९६, फोन न. ४२२२६२५९, ४२४३७२२

# प्राक्कथन

सम्पूर्ण प्रशंसा उनै अल्लाहका लागि हुन् जसले यस धर्तीमाथि सबभन्दा पहिलो मानव जोडीको सृष्टि गरे र उनीहरूद्वारा सारा स्त्री र पुरूषहरूको सृष्टि गरे । सृजनाको पहिलो दिनदेखि नै मानवजातिलाई आवश्यक परेका हरेक कुराको पूर्ति गरे र उसका लागि सीधा मार्गदर्शन गरे। अन्यथा मानिसहरू आफै बाटो पाउन सक्दैनथे। अल्लाहले मानवलाई जीवनयापनका लागि हरेक कुराको प्रयोग गर्ने तरिका बताए । सम्पूर्ण मानवजाति अल्लाह कै सृष्टि हुन् । तसर्थ उनीप्रति आभारी भई उनकै महिमागानका साथ उनकै उपासना गर्नु नै मानिसहरूले गर्न योग्य कार्य हो ।

अल्लाहले मानवजातिलाई सीधामार्ग दर्शनको उद्देश्यले पटक पटक हरेक युगमा आफ्ना दूतहरू पठाए र तिनीहरूमध्ये केही रसूलमाथि आफ्ना ग्रन्थ पनि अवतरित गरे । जसको माध्यमबाट मानिसहरूले एक निश्चित अवधिसम्म सत्य मार्गमा जीवनयापन गरे अन्ततः पथभ्रष्ट भए । जसको कारण आफ्नो ग्रन्थमा फेर बदल गर्नु र आफ्ना मनोकामनाहरूको अनुशरण गर्नु थियो । यहाँसम्मकि उनीहरूले दूतहरूका पद चिन्हहरू समेत मेटिदिए। अल्लाहका यस्ता कैयौं दूतहरू छन् जसको वर्णन हामी कुरआन मजीदमा पाउँछौं ।

ती धर्मग्रन्थहरूमा परिवर्तन भएतापनि त्यसमा धेरै यस्ता सत्यहरू छन् जसलाई उनीहरूले बदल्न सकेनन् र आज पनि ती धर्मग्रन्थहरूमा विद्यमान छन् र सत्यको खोजी गर्नेहरू त्यसको तहसम्म पुग्दछन् र त्यसलाई प्रकाशमा ल्याएरै छाड्छन् । एक मनुष्यका लागि यहि कुरा योग्य पनि छ कि उसले सत्यको खोजी गरोस् र त्यस अनुसार जीवनयापन गरोस् । मानव जातिमाथि अल्लाहको यो ठूलो अनुग्रह र अनुकम्पा रहेको छ कि जब जब मानवजाति पथभ्रष्ट भए उनले आफ्नो दूतलाई पठाउँदै गरे । अन्तमा सन्देष्टा हजरत मुहम्मद (स.) लाई आफ्नो अन्तिम ग्रन्थ कुरआनका साथ आखिरतसम्मका लागि अन्तिम सन्देष्टाको रूपमा पठाए जुन बाचा स्वयं अल्लाहले यसै ग्रन्थमा गरेका छन् । (सूरह हिज्र श्लोक:९) । मुहम्मद (स.) को जीवनी पनि कुरआनकै साथ मार्गदर्शकको रूपमा रहने छ र यस कुराको वर्णन पनि यसै कुरआनमा विद्यमान छ । (सूरह अह्जाब श्लोक: २१) मानवले चाहेमा यसै अनुसार जीवनयापन गरेर लोक तथा परलोक दुवैको सफलता प्राप्त गर्न सक्छन् ।

सत्यको खोजी गर्नेहरूको आस्था तब मजबुत हुन्छ, जब अन्य धर्मग्रन्थहरूमा पनि त्यही सत्य खोज्नमा ऊ सफल हुन्छ जसको वर्णन कुरआनमा गरिएको छ ।

यसबाट एउटा ठूलो लाभ यो पनि हुन्छ कि त्यस सत्यबाट अचेत मानिसले चेतना प्राप्त गर्दछ र त्यसको अनुसरणमा लाग्दछ । यसै उद्देश्यलाई मध्यनजर गरी इस्लाम धर्मको ख्याती प्राप्त प्रवक्ता तथा विद्वान डा. जाकिर नाइकले हिन्दू धर्मग्रन्थहरूको गहन अध्ययन गरी त्यस्ता सत्यहरूलाई निकालेर मानव जाति समक्ष ल्याएका छन् जसबाट स्वयम् हिन्दू धर्मावलम्बिहरू पनि अवगत थिएनन् न अहिले नै छन् ।

डा. जाकिर नाइक पेशागत रूपले डाक्टर हुन् । तर अहिले अल्लाहको अनुग्रह र कृपाले मानिसहरूको बिरामी आत्माको उपचारमा जुटिरहेकाछन् । उनी इस्लामको एउटा ठूलो प्रवक्ता हुन् । इस्लाम एक ईश्वरीय जीवन पद्धति हो । उनको प्रवचन तथा वक्तव्यहरू Audio / Audio Visual को रूपमा प्राप्त छन् ।

एशिया महाद्वीपको एउटा ठूलो समूह हिन्दू धर्ममा आस्था राख्दछन् जस अन्तर्गत हाम्रो यो सानो देश नेपाल पनि पर्दछ । यी सबै आफूले मानेको धर्मको शिक्षाबाट टाढा मात्र नभई यसबाट अनभिज्ञ पनि छन् । यस परिस्थितिलाई ध्यानमा राखेर एक यस्तो पुस्तकको आवश्यकता महसूस भयो जसले हिन्दू धर्मग्रन्थहरूमा रहेका सत्यहरूलाई आम जनमानस समक्ष ल्यायोस् । यसै उद्देश्यले डा. जाकिर नाइकको भाषण लगायत अन्य थुप्रै पुस्तक र लेखहरूलाई आधार बनाई यस किताबको रचना गरिएको छ । लेखिका सोफिया परवीनले धेरै नै मेहनतका साथ यस कार्यलाई सम्पन्न गरिन् । यसको लागि उनले अनेकौं पुस्तकालयबाट धार्मिक पुस्तकको अध्ययन तथा धर्मगुरुहरूसँग कुराकानी गरिन् । ती धर्मग्रन्थहरूका नेपाली अनुवादसँग समेत तुलना गरिन् र पूर्ण सन्तुष्टि पश्चात मात्र ती श्लोकहरूका अर्थ यस पुस्तकमा सामेल गरिन् ।

आशा छ कि यो पुस्तक हरेक सत्यको खोजी गर्नेहरूका लागि अति उपयुक्त हुनेछ । पाठकवर्गले यसमा उल्लेखित सत्यलाई अपनाई त्यसको अनुशरण पनि गर्ने छन् । म अल्लाहसँग प्रार्थना गर्दछु कि उनले हरेक मानव जातिलाई सत्मार्ग प्रदान गरून् किन कि मार्गदर्शन उनैको हातमा छ तर यो उसलाई मात्र प्रदान गर्दछन् जो यसको खोजीमा हुन्छ ।

अन्तमा अल्लाहसँग यो पनि प्रार्थना छ कि उनले यस कार्यलाई स्वीकारून् र यसलाई लेखिका, प्रकाशक र स्वयम् यस कार्यका कारकका लागि सदका.ए-जरिया (जारी रहने पुण्य) को दर्जा प्रदान गरून् । आमीन् !

जुलफकार अली (अलीग)
विराटनगर, नेपाल ।

# भूमिका

यस जगतमा मानव एक सर्वश्रेष्ठ प्राणी हो जसमा हामी गर्व गर्दछौं । यो एक गौरवको विषय हो किन भने बुद्धिविवेकले काम गर्ने क्षमता र शक्ति केवल मानिसमा मात्र हुन्छ । यही क्षमताकै कारणले गर्दा मानिसहरू आफ्नो जीवनमा आइपर्ने प्रायः सबै खाले समस्याहरूको समाधान गर्न सक्षम हुने गर्दछन् । त्यसैले पनि यस धर्तीमा मानिसले राज गर्न सकेको छ । यसर्थ मानिस अत्यन्त बलवान बुद्धिमान तथा शक्तिमान छन् भन्दा फरक नपर्ला ।

मानिस चेतनशील प्राणी हो । मानिसमा चेतनाको कारणले गर्दा नै ऊ हरदम नयाँ शोध-खोजका कार्यमा व्यस्त हुने गर्दछ । यस्ता शोध-खोजका कार्यहरू केवल सुख, ऐश आरामका वस्तुहरूको प्राप्तिका लागि मात्र नभई जीवनको वास्तविक उद्देश्य अनि सृष्टिकर्ता बारेको सत्यको खोजीमा पनि हुने गरेको पाइन्छ । यसका उदाहरणहरू हामी इतिहासका घटनाहरूबाट प्रशस्तै पाउने गर्दछौं । यिनै इतिहासका घटनाहरूमा यस्ता केही विशिष्ट व्यक्ति तथा उनको जीवनीबारे अध्ययन गर्न पाउँछौं जसले आफ्नो अमूल्य जीवन केवल सत्यताको खोजीमा बिताइदिए र अन्तत आफूले प्राप्त गरेका ज्ञान तथा शिक्षाहरू सबैलाई दिएर यस धर्तीबाट सदाका लागि विदा भए । यसबाट के स्पष्ट हुन्छ भने मानिसलाई सत्यको खोजी गर्न मानिसको चेतना तथा उसको चेतनाशील प्रवृतिले प्रेरित गर्दछ । फलस्वरूप ऊ सफल पनि बन्दछ ।

यद्यपी मानिस जति चेतनशील तथा सर्वश्रेष्ठ भए तापनि त्यसले केवल एक निश्चित सीमासम्म मात्र कार्य गर्दछ । अर्थात् मनुष्यको ज्ञान, शक्ति तथा सामर्थ्यमा पूर्णता छैन । यस विश्व-ब्रह्माण्ड तथा मनुष्यको सृष्टि कुन उद्देश्यले भएको हो ? मृत्यु पश्चात मनुष्य कहाँ विलिन हुने गर्दछ ? यसको वास्तविकताबारे सत्यतथ्य जानकारी प्राप्त गर्ने सामर्थ्य मनुष्यमा छैन । केवल आफ्नो बुद्धि र विवेकले यी सबैको वास्तविकता प्राप्त गर्न असंभव छ । यस्तो अवस्थामा मानिसले कल्पना शक्तिको प्रयोग गर्ने गर्दछ । तर दुर्भाग्यवश सबै मनुष्यका अलग-अलग र आफ्नै प्रकारका कल्पनाहरू हुने गर्दछन् र यो मानवीय स्वभाव हो कि उसलाई आफ्नै कल्पना तथा भावना नै प्रिय लाग्दछ । जसले गर्दा कतिपय ईश्वरीय वाणीहरूमा समेत अविश्वासका भावहरू सिर्जना हुने गर्दछन् । फलस्वरूप एक आपसमा मत-भिन्नता, द्वन्द्व, घृणा, प्रतिशोध, हिंसा आदि जस्ता अवान्छित तत्वहरू उत्पन्न भई अप्रिय वातावरणको सिर्जना हुन्छ ।

तर वास्तविकता यो हो कि सत्य सधैं एउटै र अपरिवर्तनीय हुने गर्दछ। त्यो सत्य हो कि यस विश्व-ब्रह्माण्ड तथा मनुष्य जस्ता प्राणीको सृष्टि गर्ने सृष्टिकर्ता को होलान् ? अवश्य पनि उनी यस सुन्दर संसारको रचना गर्ने एक सर्वश्रेष्ठ रचनाकार हुन्, मनुष्य जस्ता प्राणीको सृष्टि गर्न सक्ने अलौकिक शक्तिका धनी एक सर्व-शक्तिमान हुन्। अझ सबैले बुझ्ने भाषामा भन्नुपर्दा उनी एक ईश्वर हुन्।

"एक ईश्वर" जन्म र मृत्युभन्दा माथि छन् तथा उनको स्वरूप हाम्रो कल्पनाभन्दा बाहिर रहेको छ। जसले सारा संसार तथा मनुष्यहरूको रचना स-उद्देश्य गरे। यस्तो एउटा पनि रचना भेटिंदैन जुन निरूद्देश्य सावित होस्। यो सृष्टिकर्ताको अपार कृपा तथा प्रेम हो जसले मनुष्यका जिज्ञासा तथा शोध-खोजलाई पूर्णता प्रदान गरेका छन्। मनुष्यहरूलाई निरूद्देश्य भई यस सृष्टिमा भट्किनका लागि छोडेनन्। बरू सृष्टिकर्ताले आफू एक रहेको तथा आफ्नो अस्तित्व रहेको जानकारी विभिन्न युग तथा ईशदूतहरू र उनीहरूमाथि अवतरित ग्रन्थहरू मार्फत प्रदान गरेका छन्। यिनै ईशदूतहरू मार्फत ईश्वरले मनुष्यलाई जीवनको उद्देश्य पनि बताए।

"आदम, नूह, इब्राहीम, आले इमरानलाई संसारका मानवहरू मध्येबाट चयन गरियो"। (कुरआन ३:३३)

विश्वको पहिलो मानव एवं ईशदूत आदम (अ.) थिए। जसले आफ्ना सन्तानहरूलाई इस्लामको मूल शिक्षा दिने गर्दथे, त्यो हो "उपासनाको योग्य केवल एक अल्लाह (ईश्वर)"। आदम (अ.) पछि आएका सबै ईशदूतहरू जसमध्ये हजरत नूह (अ.), हजरत इब्राहीम (अ.), हजरत दाउद (अ.), हजरत मूसा (अ.), हजरत ईसा (अ.), हजरत मुहम्मद (स.) लगायत विभिन्न ईशदूतहरूले विभिन्न शिक्षाहरू दिए जसको मूल शिक्षा एकेश्वरवादको रहेको कुरा पवित्र कुरआनले पुष्टि गर्दछ। कुरआन भन्दछ - "भनिदेऊ कि उनी (ईश्वर) एक छन्" (११२:१) "उनै अल्लाह हुन्, उनी बाहेक कोही पूज्य प्रभू छैनन्" (२८:७०)। वेदान्तको ब्रह्म सूत्रले भन्दछ - "ब्रम्ह एक मात्र छन्, दोस्रो छैनन्, छँदै छैनन्, कण बराबर पनि छैनन्"। यसले पनि एकेश्वरवादको पुष्टि गर्दछ।

जसरी कुनै एक राष्ट्रमा दुई शासक हुँदैनन् त्यसरी नै पुरै ब्रह्माण्डमा केवल एक शासककै सत्ता सम्भव हुन्छ। यस तथ्यलाई प्रष्ट पार्दै कुरआन भन्दछ : "यदि यी दुई (धर्ती र आकाशमा) अल्लाह बाहेक अन्य शासक भई दिएको भए

दुवैको व्यवस्था बिग्रन्थ्यो ।" (२१:२२) यी सबैबाट एउटै निष्कर्ष निस्कन्छ र त्यो हो ईश्वर एक छन्, । अनेक सृष्टिहरूका सृष्टिकर्ता केवल एक छन् ।

तर उनका गुण अनि विशेषताहरू अनेक छन् । जस्तै अल्लाह ब्रम्ह ( खालिक) अर्थात सृष्टिकर्ता हुन्, विष्णु (रब) अर्थात पालनहार हुन्, संहारकर्ता अर्थात अल-कह्हार हुन्, हरेक चिजका ज्ञाता (तत्वदर्शी) हुन्, जन्मदाता हुन, मृत्युदाता हुन्, सम्पूर्ण विश्व ब्रह्माण्डकै एक मात्र शासक हुन् आदि इत्यादि । यी विभिन्न विशेषताहरूकै आधारमा एक ईश्वरलाई अनेक ईश्वर भनी कल्पना गर्नु तर्क सँगत देखिंदैन र यस्तो कार्य मानवका लागि एक अक्षम्य अपराध हो भनी कुरआन भन्दछ । अनेक गुणहरू तथा विशेषताहरूका बाबजुद ईश्वर एक थिए, एक छन् र एक नै रहने छन् ।

पवित्र कुरआनमा ईश्वरले सबैभन्दा असल कार्य एकेश्वर (तौहिद) लाई हृदयदेखि नै स्वीकार गर्नु हो भनेका छन् । सबैभन्दा खराब कार्य एक ईश्वरको स्थानमा अरू कसैलाई समावेश गर्नु वा साझेदार ठहऱ्याउनु हो भनेका छन् ।

निष्कर्षमा यस सन्देशको मूल उद्देश्य हो, सबैले आफ्ना वास्तविक सृष्टिकर्ताको पहिचान गरून् । ईश्वरले चाहेबमोजिमको जीवन यापन गरून् । त्यस वास्तविक ईश्वर (अल्लाह) जुन कल्पनामा आधारित नरही प्रमाण तथा सत्य तथ्यमा आधारित रहेका छन किन भने अल्लाह भन्दछन् कि मनुष्यका निम्ति यो जीवन केवल एक परीक्षा हो जसको फल यस लोक तथा परलोक दुवैमा पाउने छन् । लोक र परलोकको सफलता केवल ईश्वरले रोजेको मार्गबाट नै प्राप्त गर्न सकिन्छ ।

तसर्थ आस्तिक र नास्तिक हरेक किसिमका पाठकहरूलाई यो पुस्तक सार्थक सिद्ध हुनेछ भन्ने आशा गर्दछु र सत्यको खोजीमा रहने हरेक व्यक्तिहरूका हृदयमा यसले स्थान पाओस् भनी अल्लाह तआलासँग प्रार्थना गर्दछु ।

यस लेखनमा बारम्बार मलाई निर्देशित गर्नुहुने आदरणीय मौलाना जूल्फकार अलीज्यू प्रति हार्दिक कृतज्ञता ज्ञापन गर्दछु जसको प्रोत्साहनले गर्दा नै मैले यो पुस्तक तयार गरेकी छु । आवश्यक सामग्रीहरू उपलब्ध गराई मेरो यस कार्यलाई सहज पार्न मद्दत गर्ने इस्लामी पुस्तकालय (मिल्लते इस्लामीया नेपाल) र अन्य पुस्तकालय प्रति तथा मेरा गल्तीहरू औंल्याउँदै आवश्यक सुझाव र भाषा शुद्धिकरणमा समेत सघाउनु हुने इरफान पोखरेल सरप्रति आभार व्यक्त गर्दछु ।

म कुनै धर्मविज्ञ तथा भाषाविज्ञ नभए पनि डा. जाकिर नाइक लगायत विभिन्न विद्वान लेखक, विचारकहरूको लेखन र भनाईलाई आधार बनाएर यो पुस्तक तयार पारेकी हुँ। यसमा यस्ता केही भाग हुन सक्छन् जुन अस्पष्ट होलान्। यो अनुवादको क्रममा हुन गएको मेरै शब्दको दोष हुन सक्छ।

कम्प्यूटर टाइपिङ्ग तथा सेटिङ्गमा सनोज शाक्यज्यू, त्यस्तै अमूल्य सुझाव र सहयोगका लागि मौलाना नजरूल हसन फलाही (अध्यक्ष, इस्लामी संघ नेपाल) र मौलाना अलाउद्दीन फलाहीज्यूप्रति हार्दिक धन्यवाद ज्ञापन गर्दछु। मेरा केही मित्रहरू जसले प्रत्यक्ष, अप्रत्यक्ष रूपले मलाई यस कार्यमा मद्दत पुऱ्याएका छन्, उनीहरूप्रति पनि आभार व्यक्त गर्दै आगामी दिनहरूमा पनि यस्तै सहयोग र सद्भावको अपेक्षा राख्दछु। म लगायत सम्पूर्ण सहयोगी पात्रहरूमाथि अल्लाहको कृपा दृष्टि रहिरहोस्। आमीन्।

अन्तमा पाठकवर्गसँग अनुरोध गर्दछु कि यस पुस्तकको अध्ययन पश्चात यसमा त्रुटिहरू रहेमा रचनात्मक सुझाव दिनु होला जसले गर्दा भविष्यको प्रकाशनहरूमा सुधार हुन सकोस् र यो पुस्तक अझ बढी लाभदायी बन्न सकोस्।

सोफिया परवीन
जुन २००८

# विषय सूची

# प्रस्तावना

१)　शुरू ईश्वरको नामबाट जो अत्यन्त कृपालु एवं दयालु छन् ।

२)　हर प्रकारका स्तुति (केवल ति) ईश्वरका लागि जो समस्त सृष्टिका पालनहार हुन् ।

३)　जो अत्यन्तै करूणामय र परम दयालु छन् ।

४)　जो बदला (प्रतिफल) दिइने दिनका स्वामी हुन् (जुन दिन आफ्ना कार्यहरूको परिणाम सबैले पाउने छन्)

५)　(हे ईश्वर !) हामी तिम्रै बन्दना गर्दछौं र तिमीसँग सहायता माग्दछौं ।

६)　(हे ईश्वर !) हामीलाई (कल्याणको) सीधा मार्ग देखाउ ।

७)　त्यो मार्ग जो (जुन मार्ग अपनाउँदा) तिम्रो कृपापात्र भए, न कि (जुन मार्ग अपनाउँदा) तिम्रा प्रकोपका भागी भएका, न पथभ्रष्ट भएकाहरूको मार्ग नै ।

मक्कामा अवतरित यी ७ वटा श्लोकहरूले युक्त यस स्तुति ईश-ग्रन्थ कुरआनको प्रारम्भिक अध्याय हो । यो एक यस्तो व्यक्ति (ईश्वर भक्त) को प्रार्थना हो जो आफ्ना सृष्टिकर्ता (ब्रह्म) को गुण-गानमा तल्लीन छ तर ऊ ती ईश्वरको स्तुतिमा मग्न छैन, जो वंश, जाति तथा धार्मिक सम्प्रदायहरूका प्रभु हुन् बरू उनी 'रब्ब-उल-आलमीन' (सर्वलोक महेश्वर) को स्तुतिमा तल्लीन छ जो समस्त सृष्टिका पालनहार (विष्णु) हुन् र जसले समस्त मानवजातिलाई समान रूपले पालन गर्दछन् र उनको करूणा समान तथा सबैका लागि हुन् । यसपछि आफ्ना सृष्टिकर्तालाई पुकार्नका निम्ति उनका विषयमा जति पनि गुणहरूबारे भक्तलाई ज्ञान छ ती मध्ये केवल दया र न्यायका अतिरिक्त अरू केही छैन । ऊ आफ्ना पालनहारका सामु नतमस्तक भई उनको भक्तिका लागि शिरोधार्य गर्दछ र यो भन्दछ कि केवल तिमी नै हौ जसका सामु भक्तिभावले मेरो शिर झुक्दछ, केवल तिमी नै हौ जो हाम्रा सारा कष्ट र अभावमा सहायक छौ । भक्तले आफ्नो उपासना र सहायता दुवैको याचना केवल एक तत्वका साथ सम्बद्ध गरिदिन्छ र यस प्रकार संसारका सारा शक्तिहरू, हर प्रकारका सत्ताधारीहरूबाट आफूलाई सम्बन्ध-विच्छेद गरिदिन्छ । अब कसैका सम्मुख ऊ हात फैलाउँदैन । ऊ अब ईश्वरसँग सत्य र सही मार्ग निर्देशको कामना र सो निर्देशनको पालना गर्न सक्ने सामर्थ्यको याचना गर्दछ । तर कुन सही र सत्य मार्गको ? कुनै विशेष वंशले देखाएको सत्य मार्ग ? कुनै जातिले देखाएको मार्ग ? वा कुनै विशेष धार्मिक समुदायले देखाएको मार्ग ?

होइन ती सत्यमार्ग जुन संसारका समस्त धार्मिक आयामहरू र समस्त ईशदूतहरू, सचेतकहरूका सु-सम्मत मार्ग जसको सन्देशहरूको अध्ययन तथा विश्लेषण पश्चात सम्पूर्ण मानवसमक्ष प्रष्ट हुन्छ, चाहे ती कुनै युगको हुन् वा कुनै वंशको वा कुनै जातिको । यसप्रकार ती भक्त पथभ्रष्टताको मार्गबाट बच्न चाहन्छन् तर यहाँ पनि कुनै विशेष वंश वा जाति ती मार्गहरूबाट बच्न चाहन्छ जुन संसारका समस्त पथभ्रष्ट मनुष्यले अनुसरण गरिसकेका छन् । यसरी ती भक्तले गर्ने याचना समस्त मानव मात्रका अत्यन्त व्यापक भलाई, सत्यता र सुकर्म हुन् र जुन कुराबाट बच्न चाहन्छ त्यो पनि मानवताको विश्वव्यापी खराबी हुन् ।

एकैछिन विचार गर्नुहोस् त, धार्मिक अवधारणाको यो रूपले मानवको मानसिकताको कस्तो प्रकारको ढाँचा प्रस्तुत गर्दछ ? जुन मनुष्यको मन र मस्तिष्क यस्तै ढाँचामा ढलेर निस्कन्छ ती कस्ता प्रकारका मनुष्य होलान् ? कम्तिमा पनि तपाईं यी दुई कुराहरूलाई अस्वीकार गर्न सक्नुहुन्न । त्यो हो उसको आस्तिकता ईश्वरको व्यापक करूणा र उसको सौन्दर्यको अवधारणामा आधारित आस्तिकता हुन्छ र कुनै पनि रूपमा ऊ वंश अथवा जाति या समुदायहरूका अनुयायी मनुष्य हुँदैन, ऊ त व्यापक मानवताको मानव हुन्छ, यस्तो मानवता जुन नैतिकतामा अडेको हुन्छ । 'धर्म' नैतिकताको आधार हो र कौरानिक शिक्षाको (कुरआनको शिक्षाको) वास्तविक आत्मा यही हो ।

# इस्लाम तथा हिन्दू धर्मको परिचय

## "हिन्दू"को शाब्दिक अर्थ

हिन्दू शब्दसँग भौगोलिक विशेषता गाँसिएको पाइन्छ । यथार्थमा यो शब्द 'सिन्धु' अथवा 'इन्दुस नदी' वरपरका बासिन्दाहरूका निम्ति प्रयोग गरिन्थ्यो । केही इतिहासकारहरूका अनुसार यस शब्दको प्रयोग प्रथम पटक केही पर्सियनहरूबाट भएको थियो जो उत्तर पश्चिम हिमालय हुँदै भारत पसेका थिए । इनसाइक्लोपेडीया अफ रिलिजन एण्ड इथिक्सको आधारमा भन्नुपर्दा 'हिन्दू' शब्दको वर्णन भारतमा मुस्लिमहरूको आगमनभन्दा पूर्व भारतीय साहित्य अथवा कुनै पनि धर्मपुस्तकमा भएको पाईदैंन । जवाहरलाल नेहरूद्वारा लिखित पुस्तक 'डिस्कभरी अफ इण्डिया' को पाना नं. ७४-७५ का अनुसार हिन्दू शब्दको सम्बन्ध एक तान्त्रिकसँग रहेको थियो अर्थात यस शब्दले कुनै पनि सम्बन्धित धर्मका धर्मावलम्बीहरूलाई नभई केवल व्यक्तिलाई मात्र सम्बोधन गरेको देखिन्छ । लामो समयको अन्तराल पश्चात मात्र यो शब्द धर्मसँग सम्बद्ध हुन गयो । छोटकरीमा भन्नुपर्दा हिन्दू शब्दले इन्दुस प्रदेशका बासिन्दाहरू अथवा भारतीयहरूलाई सम्बोधन गरिन्थ्यो ।

## हिन्दू धर्मको परिभाषा

हिन्दू शब्दबाट हिन्दू धर्मको नामाकरण भएको हो । अंग्रेजीमा यसलाई हिन्दूइज्म (Hinduism) भनिन्छ जुन १९ औं शताब्दीमा अंग्रेज नागरिकद्वारा नामाकरण गरिएको हो, यस नामले इन्दुस प्रदेशका बासिन्दाहरूलाई संकेत गरिन्थ्यो । ब्रिटान्निका २०:५८१ का अनुसार बेलायती लेखकहरूद्वारा १८३० मा भारतमा मुस्लिम तथा ईसाईहरू बाहेक सबै भारतीयहरूलाई हिन्दूइज्म (हिन्दू) शब्दबाट सम्बोधन गरिन्थ्यो ।

यो कहिलेदेखि प्रारम्भ भएको हो भन्ने जानकारी कसैलाई छैन । यो कुन विशिष्ट व्यक्ति वा सन्देष्टामाथि अवतरित गरिएको हो र यसको निर्णायक पक्ष के हो भन्ने बारे यो मौन छ । एक व्यक्तिले ऊ हिन्दू हो भनी स्वीकार गर्दछ भने ऊ सच्चा हिन्दू ठहरिन्छ चाहे उसको आस्था जे-जसमा रहेतापनि वा उसले जसको उपासना गरेतापनि ।

हिन्दू विद्वानहरूका अनुसार हिन्दू धर्मलाई सनातन धर्म अथवा वैदिक धर्म

भनी सम्बोधन गरिनुपर्दछ भन्ने विचार व्यक्त गर्दछन् । जसको अर्थ अपरिवर्तनीय हुन्छ । स्वामी विवेकानन्दका अनुसार यस धर्मका धर्मावलम्बीहरूलाई वैदिक भनी सम्बोधन गरिनुपर्दछ ।

## इस्लामको परिभाषा

संसारमा जति पनि धर्महरू छन् तीमध्ये प्रत्येकको नाम कि त कुनै विशेष ब्यक्तिको नामबाट राखिएको छ वा त्यस जातिको नाममा राखिएको छ जुन जातिमा सो धर्मको जन्म भएको हो । उदाहरणका लागि ईसाई धर्मलाई लिनुहोस्, यस धर्मका प्रचारक "ईसा मसीह" भएकोले यस धर्मको नाम ईसाई भएको हो । यसैगरी "महात्मा गौतम बुद्ध" बुद्ध धर्मका प्रवर्तक भएकोले यस धर्मको नाम बुद्ध धर्म रहन गएको हो । संसारमा अन्य धर्महरूको नामाकरण पनि यसरी नै गरिएको छ । तर, इस्लाम धर्मको सम्बन्ध कुनै ब्यक्ति वा जातिसँग छैन । बरु यस शब्दले एउटा विशेष गुण प्रकट गर्दछ, जसको सम्बन्ध स्वयम् "इस्लाम" शब्द र त्यसको अर्थसित छ । यो नाम कुनै ब्यक्तिको मष्तिस्कबाट निस्केको होइन न त यो कुनै विशेष जातिमा सिमित छ । साथै यसको सम्बन्ध कुनै ब्यक्ति, देश वा जातिसित पनि छैन । इस्लामको बिशेषता वा गुण मानवमा उत्पन्न गराउनु नै यसको उद्देश्य हो ।

'इस्लाम' अरबी शब्द हो जुन अरबी भाषाको 'सलाम' शब्दबाट उत्पत्ति भएको हो, जसको अर्थ 'शान्ति' हुन्छ । इस्लामको अर्को अर्थ हो आफूलाई अल्लाह 'एक ईश्वर' प्रति समर्पित गर्नु, ईश्वरको आज्ञापालन गर्नु । सारांशमा भन्नुपर्दा इस्लाम भनेको एक यस्तो 'शान्ति' हो जुन अल्लाहप्रति आफूलाई समर्पण गरे पश्चात प्राप्त हुन्छ ।

## मुस्लिमको परिभाषा

मुस्लिम एक त्यस्तो व्यक्ति हो जसले आफूलाई केवल एक ईश्वर (अल्लाह) प्रति समर्पित गरेको हुन्छ । यसर्थ ईश्वरको आज्ञापालन गर्ने व्यक्तिलाई मुस्लिम भनिन्छ । अल्लाहको खुशी अनुसार सांसारिक कृयाकलाप गर्ने व्यक्ति नै मुस्लिम हो ।

# धार्मिक ग्रन्थहरूका नाम तथा परिचय

## क) हिंन्दू धर्मका ग्रन्थहरू

हिन्दू धर्ममा दुई किसिमका पवित्र लेखहरू पाइन्छन् । ती हुन्,

**१) श्रुति लेख २) स्मृति लेख**

### १) श्रुति लेख :

श्रुति भन्नाले सुनेर ग्रहण गरेका कुराहरू हुन् । हिन्दू धर्ममा यसलाई निकै पुरानो र निकै नै पवित्र ग्रन्थको रूपमा लिइन्छ । श्रुति लेखलाई दुई प्रमुख भागमा विभाजन गरिएको छ । ती वेद र उपनिषद् हुन् । यी ग्रन्थहरूलाई ईशवाणीको रूपमा लिइन्छ ।

- **वेद**

वेदको अर्थ ज्ञान, लाभ, सत्ता र विचार गरी चार अर्थ हुन्छन् भनी व्याकरण पढ्नेहरू अर्थ्याउने गर्दछन् । त्यस्तै 'वेद भनेको भगवानको मुखको वाणी हो', 'वेदको अर्थ कसैले लगाउन सक्दैन', 'वेद स्वयं भगवान हुन्' भन्ने खालका परम्परागत विचारहरू पनि रहेका छन् । समग्रमा भन्नुपर्दा वेदको अर्थ 'ज्ञान' हो । (यजुर्वेद, नेपाली अनुवाद तिलक प्रसाद लुँइटेल) ।

यो चार प्रकारका छन् । (यद्यपि संख्यात्मक रूपमा भन्नुपर्दा यसका १,१३१ वटा शाखा छन् जसमध्ये झण्डै एक दर्जन मात्र प्राप्त छन् । पतञ्जलीका महाभाष्यका अनुसार ऋग्वेदका २१ शाखाहरू छन्, ९ वटा अथर्ववेदका छन्, त्यस्तै १०१ वटा यजुर्वेदका र १,००० वटा सामवेदका छन् ।)

ऋग्वेद, यजुर्वेद र सामवेदहरू धेरै नै प्राचीन ग्रन्थहरू हुन् जसलाई 'त्राय विद्या' वा 'त्रै-विज्ञान' पनि भनिन्छ । यीमध्ये ऋग्वेद सबैभन्दा पुरानो ग्रन्थ हो जसलाई ३ लामो र भिन्ना भिन्नै समयावधिमा संकलन गरिएको हो । चौथो वेद अथर्ववेद हो जुन सबभन्दा अन्तमा संकलन गरियो ।

चारैवटा वेदहरू कहिले संग्रह गरिएका हुन् भन्ने विषयमा विभिन्न मतहरू पाइन्छ । आर्य समाजका संस्थापक स्वामी दयानन्दका अनुसार वेदहरू १,३१० मिलियन वर्ष अघि अवतरित ग्रन्थ हुन् । तर केही विद्वानहरूका अनुसार वेदहरू ४,००० वर्ष भन्दा बढी पुरानो नरहेको कुरा जनाएका छन् । त्यस्तै यी वेदहरू

कहाँ, कुन कालमा र कसमाथि अवतरित गरिएका हुन् भन्ने विषयमा पनि भिन्ना भिन्नै मत रहेका छन् । यतिका विभेदहरू हुँदा हुँदै पनि वेद हिन्दू धर्मको मुख्य आधार तथा सबभन्दा बढी विश्वासिलो धर्मग्रन्थ बन्न सफल भएको छ ।

- **उपनिषाद्**

उपनिषद् 'उप', 'नि' तथा 'षद्' बाट निर्मित शब्द हो जसमा 'उप' को अर्थ समीप, 'नि' को अर्थ मूनि र 'षद्' को अर्थ 'बस्नु' हो । अर्थात नजिकै समूहमा गुरूको मूनि बसेर उपदेश तथा शिक्षा ग्रहण गर्नु नै उपनिषद् हो ।

समकारको अनुसार 'उपनिषद्' 'षद्' शब्दबाट निर्मित शब्द हो, जसको अर्थ 'गति' वा 'प्राप्ति' वा 'नाश गर्नु हो, जहाँ 'उप' र 'नि' उपसर्ग लागेको छ । अतः उपनिषद् भनेको ब्रम्हज्ञान (वाणी) हो जसबाट अज्ञानता नाश हुन्छ ।

उपनिषद्हरू २०० भन्दा बढी छैन तापनि भारतीय परम्परानुसार यो मात्र १०८ मा सिमित रहेको छ । उपनिषद्का सिद्धान्तहरू १० वटा छन् तैपनि केहीले यो १० वटा भन्दा बढी त केहीले १८ को संख्यामा रहेको जनाएका छन् ।

वेदान्तको अर्थ वेदको आन्तरिक भाग, सारभाग या निष्कर्ष भागको रूपमा अर्थ्याउन सकिन्छ भनी लक्ष्मी प्रसाद दाहाल 'अनन्त धारा, वर्ष २, अङ्क ६ मा लेख्छन् । उनी अगाडि लेख्छन् वेदान्त दर्शनको व्याख्याता शास्त्रहरू मूलतः सिद्धान्तका रूपमा ब्रम्ह सूत्र, उपनिषद् र श्रीमद्भागवतगीता हुन्'' ।

वेदान्तको अर्थ उपनिषद् हो । तर अहिले यस शब्दको प्रयोग उपनिषद्मा आधारित दर्शनशास्त्रको प्रणालीका लागि हुने गर्दछ। शाब्दिक रूपले वेदान्त भन्नाले वेदको अन्त भन्ने बुझिन्छ। 'वेदस्य-अन्त', अन्तको साथै वेदको उद्देश्य (निष्कर्ष) भन्ने पनि बुझिन्छ । उपनिषद् वेदका निर्णायक पक्षहरू समेटिएका ग्रन्थ हुन् जुन समयको गति अनुसार वैदिक कालको अन्तमा आएको छ । केही पंडितहरूले 'उपनिषद्' वेदहरूभन्दा पनि उत्कृष्ट ग्रन्थ हुन् भन्ने विचार प्रकट गरेका छन् ।

**२) स्मृति लेख :**

यो श्रुति लेख झैं पवित्र ग्रन्थ भने होइन तापनि हिन्दूहरू माझ यो आज पनि लोकप्रिय एवं महत्वपूर्ण ग्रन्थको रूपमा रहेको छ। स्मृति भन्नाले सम्झना भन्ने बुझिन्छ। यो ग्रन्थ बुझ्न सजिलो हुन्छ किनभने यसमा वर्णन गरिएका कुराहरू पौराणिक कथामा आधारित हुन्छन् । स्मृति लेख ईशवाणी नभई मानवद्वारा

रचित एक रचना हो जसमा मानिस तथा समाजका दैनिक क्रियाकलापका विषयमा आवश्यक जानकारी तथा नियमावली प्रस्तुत गरिएका हुन्छन् । यसलाई धर्मशास्त्र पनि भनिन्छ जस अन्तर्गत पुराण र इतिहास पनि पर्दछन् ।

हिन्दू धर्मग्रन्थहरू धेरै छन् ती मध्ये सबैभन्दा पुराना ग्रन्थहरू - वेद, उपनिषद् तथा पुराण हुन् ।

- **भागवत गीता**

हिन्दू धर्म-ग्रन्थहरूमध्ये निकै लोकप्रिय रहेको ग्रन्थ हो- भागवत गीता । लक्ष्मीप्रसाद दाहाल लेख्छन् "श्रीमद्भागवतगीता पनि उपनिषद् कै सार भएकोले यो पनि उपनिषद् नै हो - अर्थात गीतोपनिषद्" ।

- **पुराण**

हिन्दू धर्ममा अर्को विश्वासिलो तथा व्यापक मात्रामा अध्ययन गरिने ग्रन्थ पुराण हो । यस ग्रन्थमा ब्रम्हाण्डको सृष्टिको इतिहास, आर्यन जाति तथा विभिन्न देवी-देवताका कथा तथा इतिहास वर्णन गरिएका छन् । पुराण पनि वेदहरू झैं सोही समयमा वा केही अघि पछि नै अवतरित भएको ग्रन्थ मानिन्छ ।

महाऋषि व्यासले पुराणलाई १८ खण्डमा विभाजित गरेका छन् । उनले वेदलाई विभिन्न शीर्ष भागमा क्रमन्यास समेत गरेका छन् । गीता तथा महाभारत पनि उनीद्वारा नै लिखित ग्रन्थहरू हुन् ।

पुराणहरूमध्ये भविष्य पुराणलाई प्रमुख मानिन्छ किनकी यसमा भविष्य बारे वर्णन गरिएको छ । हिन्दू धर्मावलम्बीहरू यसलाई ईशवाणी हो भनी विश्वास गर्दछन् । महाऋषि व्यास केवल यसका संकलनकर्ता मात्र हुन् । वास्तविक रचनाकार त स्वयम् ईश्वर हुन् ।

## ख) इस्लाम धर्मका ग्रन्थहरू:

छोटकरीमा भन्नुपर्दा इस्लाम आस्था तथा सत्कर्मको धर्म हो । तर यसको परिभाषा यति मै सीमित रहँदैन । धर्म भन्ने वित्तिकै केवल ईश्वरको सम्झना, पाप, पुण्य, आराधना तथा परलोक आदिकै विषयमा बढी केन्द्रित रहेको हुन्छ भन्ने धारणा प्राय मानिसमा रहेको पाइन्छ । इस्लाम धर्म यतिमा मात्र सीमित रहेको छैन । यो मानवीय जीवनका सबै पक्षहरूलाई समेटेको एक पूर्ण संविधान हो ।

जसले नियम कानून तथा सुव्यवस्थित संरचनाको निर्माण गर्दछ । जसले मानवीय जीवनमा आधारित हरेक पक्षहरूलाई नियन्त्रण गरी सम्मान युक्त सामाजिक तथा व्यवहारिक जीवनको निर्माण गर्दछ । यसर्थ इस्लाम एक सफल जीवन जीउने पद्दति हो । इस्लामको ऐनकानूनलाई 'शरीअत' भनिन्छ जसको मूलस्रोत पवित्र ग्रन्थ कुरआन र हदिस हुन् ।

## १) पवित्र कुरआनः

कुरआन एक ईश्वरीय प्रकाशना हो जसका हरेक शब्दको निर्माण तथा रचना स्वयं ईश्वरबाट भएका छन् । कुरआनको शाब्दीक अर्थ 'पढ्नु' हुन्छ । यो एक ईश्वरीय वाणी हो । जुन अन्तिम सन्देष्टा मुहम्मद (स.) माथि फरिश्ता जिब्राइलको माध्यमबाट अल्लाहले अवतरित गराएका हुन् । मुहम्मद (स.) को जन्म ई.सं. ५७१ मा भएको थियो । मुहम्मद (स.) माथि ४० वर्षको उमेरमा ईश्वरीय प्रकाशना अवत्तीर्ण हुने क्रमको शुरूवात भयो जुन २३ वर्षसम्म जारी रह्यो अर्थात् उनको स्वर्गारोहणको केही दिन पूर्वसम्म । कुरआन अन्तिम तथा निर्णायक ईश्वरीय वाणी हो । यस ग्रन्थको अवतरण गर्नुको अभिप्राय मानवलाई जीवनका उद्देश्य बारे जानकारी प्रदान गर्नु सही मार्ग निर्देश गर्नु, त्यो मार्ग जुन ईश्वरले रोजेका हुन् ।

## २) हदीसः

कुरआनमा उल्लेखित शिक्षाहरूलाई मुहम्मद (स.) ले आफ्नै शब्दमा वर्णन अनि ब्याख्या गर्नुभयो तथा व्यवहारिक कार्यान्वयन समेत गरी व्यक्ति तथा समाजमा प्रदर्शित गर्नुभयो । अर्को शब्दमा भन्नुपर्दा मुहम्मद (स.) ले वाणी, उपदेश तथा अभ्यासद्वारा कुनै पनि कुराप्रति आफ्ना सहमति तथा असहमति प्रकट गर्नुभयो । त्यसलाई हदीस भनिन्छ । मुहम्मद (स.) सम्पूर्ण मानवताकै एक मात्र आदर्श हुन् भनी कुरआन भन्दछ । जसले इस्लामका शिक्षालाई सृष्टि रहुञ्जेलसम्मका लागि पूर्णता प्रदान गरेका छन् । एक व्यक्तिले कसरी इस्लामी पद्धति अनुसार सफल जीवन जिउन सक्छ भनी मुहम्मद (स.) ले उपदेश, अभ्यास तथा उदाहरण प्रस्तुत गरी प्रमाणित गरिदिनु भएको छ । हदीसका केही संकलनहरू छन्, सहीह् बुखारी, सहीह् मुस्लीम, मुअत्ता इमाम मालिक, सुनने-अबुदाउद, सुनने-तिर्मिजी, सुनने-इब्नेमाजा आदि ।

# हिन्दू धर्ममा प्रार्थना

प्रार्थनाको प्रकृतिः हिन्दू धर्ममा विश्वास गरिने ३३ करोड देवी-देवताहरूमध्ये लगभग ४०० को वर्णन हिन्दू धर्मग्रन्थहरूमा पाइन्छ। ३२,९९,९९,६०० देवी-देवताहरूको वर्णन कुनै पनि ग्रन्थहरूमा भेटिदैन। लगभग ४०० को वर्णन भेटिए तापनि झण्डै २०० वटा देवीदेवताहरूको पूजा आराधना प्राय दैनिक जीवनमा पण्डितहरूले गरेको पाइन्छ भने बाँकी केहीको पूजा वर्षको एक पटक गरिन्छ।

हिन्दूधर्ममा देवीदेवताहरूप्रतिको विश्वास तथा आराधना बारेको दृष्टिकोण एक प्रान्तको अर्को प्रान्तसँग, एक क्षेत्रको अर्को क्षेत्रसँग भिन्न रहने गर्दछ। जस्तैः पश्चिम बंगालमा दुर्गाको पूजा, उत्तरी भारतमा रामको पूजा, दक्षिणी भारतका केही प्रान्तहरूमा रावणको पूजा गरिन्छ। (A comparative study - Murtahin Billah Fazlie)

आर्यन धर्महरूमध्ये निकै नै लोकप्रिय रहेको धर्म 'हिन्दू धर्म' हो। यदि तपाईंले कुनै साधारण हिन्दूलाई तपाईं कतिवटा ईश्वरप्रति आस्था राख्नुहुन्छ भनी प्रश्न गर्नुभयो भने यसको जवाफ कसैबाट तीन वटा, कसैबाट ३३ वटा, कसैबाट एक हजार आउनेछ भने, कसैले चाँहि ३३ कोटी (करोड) भन्नेछन्। तर वेदहरूको राम्रो जानकारी राख्ने कुनै विद्वान हिन्दूसँग तपाईं सोही प्रश्न गर्नुहुन्छ भने यसको जवाफ आउँछ की हिन्दूले केवल एक ईश्वरप्रति मात्र आस्था एवं विश्वास राख्नुपर्छ तथा सो को मात्र उपासना गर्नुपर्दछ।

इस्लाम तथा हिन्दू धर्म बीचको प्रमुख भिन्नता के हो भने एक सामान्य हिन्दूले अद्वैतवादको सिद्धान्तमा विश्वास गरेका हुन्छन्, अर्थात प्रत्येक वस्तु ईश्वर हुन् जस्तै - रुख ईश्वर, सूर्य ईश्वर, चन्द्रमा ईश्वर, सर्प ईश्वर, बाँदर ईश्वर, सम्पूर्ण मानव ईश्वर हुन्। तर इस्लामका मत अनुसार प्रत्येक वस्तु 'ईश्वरका' अर्थात सबै वस्तुहरू ईश्वरका सृष्टि हुन्। जस्तै - रुख ईश्वरको, सूर्य ईश्वरको, चन्द्रमा ईश्वरको, बाँदर ईश्वरको, सम्पूर्ण मानव ईश्वरका सृष्टि हुन्।

अतः इस्लाम र हिन्दू बीचको प्रमुख भिन्नता केवल 'का' को रहेको छ। यदि मात्र 'का' को भिन्नतालाई समाधान गर्न सकियो भने हिन्दू र मुस्लिम समान हुन सक्ने तथ्यलाई नकार्न सकिन्न।

# एकेश्वरवाद र धर्म ग्रन्थहरू

पवित्र कुरआनमा भनिएको छ -"त्यस बिन्दु समक्ष आउ जुन तिमी र हामी बीच समान रूपले मान्य एवं सिद्ध छ" । "त्यो" यो हो कि हामी अल्लाह बाहेक कसैको उपासना नगरौं र उनी समक्ष कसैलाई साझा नठहऱ्याऔं (३:६४) । अतः हामी सबै एकमत होऔं त्यस बिन्दूमा जुन हिन्दू धर्मग्रन्थ तथा इस्लाम धर्मग्रन्थको विश्लेषण पश्चात हामी समक्ष प्रष्ट हुन्छ ।

भागवत गीताको अध्याय ७, श्लोक २० मा भनिएको छ- "भौतिक आशक्तिद्वारा जसको बुद्धि अपहरण भएको छ, तिनीहरू देवताहरूकै शरणमा जान्छन्, र आ-आफ्नो स्वभावनुसार पूजाका विशेष-विशेष विधि विधानहरूको पालना गर्न थाल्दछन् ।"

## १. उपनिषद् :-

- छण्दोग्य उपनिषद्, अध्याय ६, खण्ड २, श्लोक १ मा भनिएको छ- "एकम् इवद्वितियम" अर्थात 'ईश्वर एक छन्, कुनै दोश्रो विनाको"
- उस्तै किसिमको भनाई पवित्र कुरआनको सूरह इखलास, अध्याय ११२, श्लोक १ मा भनिएको छ, "कुल्हु वल्लाहु अहद" "भनिदेउ कि उनी (अल्लाह) एक्ला छन्"

स्वेतसवत्र उपनिषद्को अध्याय ६, श्लोक ९ मा वर्णन गरिएको छ -

*"न तस्य कच्श्चित्पतिरास्ति लोके*
*न चेशिता नैव च तस्य लिङ्गम्*
*स कारणं करणाधिपाधियो*
*न चास्य कच्श्चिज्जनिता न चाद्यिप"*

'लोकमा उनको कुनै स्वामी छैन, न कुनै शासक या त्यसको चिन्ह नै । उनी सबका कारण हुन् र इन्द्रियाद्यिष्ठाता जीवका स्वामी हुन् । उनका न कुनै उत्पत्तिकर्ता छन् र न कुनै स्वामी नै ।

- यस्तै भनाइ पवित्र कुरआनको सूरह इखलास, अध्याय ११२, श्लोक ३ मा रहेको छ- "लम् यलिद् व लम यूलद्"

"उनले न कसैलाई जन्म दिए न उनी कसैबाट जन्मिए"

- श्वेतसवत्र उपनिषद् अध्याय ४, श्लोक १९ मा वर्णन गरिएको छ-

*"नैनमूर्ध्व व तिर्यञ्च न मध्ये परिजग्रभत*

*न तस्य प्रतिमा अस्ति यस्य नाम मध्ययश"*

"उनी जस्तै अरू कोही छैनन् तथा उनको नामको यश विशाल छ" ।

- यस्तै भनाइ पवित्र कुरआनको सूरह इखलास, अध्याय ११२, श्लोक ४ मा रहेको छ । "व लम् यकुल्लहु कुफुवन अहद्"

*"र उनी जस्ता कोही छैनन्"*

- यस्तै सूरह शूरा, अध्याय ४२, श्लोक ११ मा भनिएको छ-

*"लैस कमिस्लिही शैउन्"*

*"उनी जस्तो कुनै चीज छैन"*

१.१ केनोपनिषद् १:६

*"यच्चक्षुषा न पश्यति येन चक्षु, बिँ पश्यति ।*

*तदेव ब्रम्हत्व विद्वि नेदं यदिदमुपासते"* ।

अर्थात जसले चक्षु (आँखा)द्वारा देख्न सक्दैन, यद्यपी आँखा जसको महिमाबाट देख्नमा समक्ष हुन्छ, उसलाई तिमी ब्रह्म जान । आँखाद्वारा देख्ने जुन तत्वलाई मानिस उपासना गर्दछ, त्यो ब्रह्म होइन ।

- श्वेतसवत्र उपनिषद्, अध्याय ४, श्लोक २० मा वर्णन गरिएको छ-

*"न संदृशे तिष्ठति रूपमस्य*

*न चक्षुषा पश्यति कच्श्रचनैनम्*

*हृदा हृदिस्थं मनसा स एन*

*मेवं विदुरमृतास्ते भवन्ति"* ।

"उनको स्वरूप नेत्रादिले ग्रहण गर्न योग्य स्थानमा रहेको छैन, उनलाई कसैले पनि देख्न सक्दैन । जसले उनलाई हृदयस्थित परमात्माको शुद्दबुद्दि यानी मनले जान्ने एवं बुझ्ने प्रयास गर्दछ ऊ नै अमर हुन्छ" ।

- यस्तै भनाइ पवित्र कुरआनको सूरह अल-अन्आम, अध्याय ६, श्लोक १०३ मा रहेको छ -

*"ला तुद्रिकुहुल् अब्सारू व हुव युद्रिकुल् अब्सार व हुवल्लतिफुल्खबीर"*

अर्थात "उनलाई दृष्टिहरूले ग्रहण गर्न सक्दैनन् तर उनी सबैलाई देख्दछन् । र उनी सूक्ष्मदर्शी तथा हरेक चीजका ज्ञाता छन्" ।

## २. वेद

२.१ यजुर्वेद, अध्याय ३२, श्लोक ३ मा भनिएको छ,

*"ना तस्य प्रतिमा अस्ति" अर्थात "उनको कुनै प्रतिमा छैन" ।*

अझ अगाडि भनिएको छ -

"उनको नाम र यश अत्यन्त विशाल छ, तर पनि उनको कुनै प्रतिमा छैन ।"

- यजुर्वेद, अध्याय ४०, श्लोक ८ मा भनिएको छ-

*"त्यो परमात्मा सर्वव्यापी छ, तेजस्वी छ, त्यो दोषरहित छ, स्नायु वा शरीररहित र छिद्र वा दागरहित छ । त्यो शुद्ध र निस्पाप छ । त्यो क्रान्तदर्शी कवि हो, मनीषी हो, सर्वजयी र स्वयं उत्पन्न हुने खालको छ । उसैले अनादि कालदेखि नै सबैका लागि यथायोग्य साधन र अर्थको व्यवस्था मिलाएको छ ।"*

- यजुर्वेद, अध्याय ४०, श्लोक ९ मा भनिएको छ -

"अन्धं तमः प्र विशन्ति येसंभूतिमुपासते" अर्थात जसले असम्भूतिरूपी सङ्गठित सिर्जनशीलताको मात्रै उपासना गर्दछन् उनीहरू सबै किसिमका अन्धकारमै छोपिन्छन् । जस्तैः- हावा, पानी, अग्नी, आदि । अझ अगाडि भनिएको छ- "जुन मानिस संभूतिजस्ता विखण्डन र विनाशको उपासना गर्दछन्, त्यस्तो खालको प्रवृत्तिमा रमाउनेहरू घोर अज्ञानरूपी अन्धकारमा छोपिन्छन्" ।

२.२ अथर्ववेद

- अथर्ववेद, बिसौं मण्डल, सूक्त ५८, श्लोक ३ मा भनिएको छ - 'देव महा ओसी' अथवा 'ईश्वर महान छन्'
- यस्तै किसिमको भनाइ सूरह रअ्द, अध्याय १३, श्लोक ९ मा रहेको छ-

उनी (अल्लाह) आन्तरिक र बाह्य सबै कुराका विज्ञ छन् तथा महान एवं उच्च छन् ।

२.३ ऋग्वेद

- वेदहरूमध्ये निकै नै पुरानो तथा पवित्र वेद हो - ऋग्वेद । ऋग्वेद, पहिलो

मण्डल, अध्याय (सूक्त) १६४ श्लोक ४६ मा भनिएको छ- धार्मिक विद्वानहरूले सत् रूपमा रहेका एकै परमेश्वरलाई विभिन्न उपनाम र प्रशंसा गरेका छन् । परमात्मालाई इन्द्र, मित्र, वरूण र अग्नि भनिएको छ ।

- ऋग्वेद, दोश्रो मण्डल, सूक्त १, श्लोक ३

सर्व-शक्तिमान ईश्वरका झण्डै ३३ वटा विशेषताहरू ऋग्वेदको दोश्रो मण्डल सूक्त १ मा वर्णन गरिएका छन् ती मध्ये प्रमुख विशेषताहरू यस प्रकार रहेका छन् -

**ब्रम्हः-** ऋग्वेदमा वर्णन गरिएका ईश्वरका विशेषताहरूमध्ये सबैभन्दा प्रमुख ब्रम्ह अर्थात सृष्टिकर्ता हो । यस शब्दलाई अरबी भाषामा 'खालिक' भनिन्छ । ईश्वर 'खालिक', ब्रम्ह वा सृष्टिकर्ता हुन् । अत ईश्वरलाई ब्रम्ह भन्न सकिन्छ । तर यदि कसैले 'ब्रम्ह नै सर्व-शक्तिमान ईश्वर हुन् जसका चारवटा मुकुटधारी टाउका र चारवटा हातहरू हुन्छन् भनेमा यो वेद र कुरआनको दृष्टिमा पूर्णतया अमान्य हुन्छ त्यस्तै तपाईं यजुर्वेदको अध्याय ३२, श्लोक ३ को विरूद्ध जाँदै हुनुहुन्छ जसमा भनिएकोछ- "ना तस्य प्रतिमा अस्ति" अर्थात 'ईश्वरको कुनै प्रतिमा छैन" ।

**विष्णुः-** ऋग्वेदमा वर्णन गरिएका ईश्वरका विशेषताहरूमध्ये अर्को प्रमुख विशेषता हो 'विष्णु' । विष्णु अर्थात पालनहार । अरबी भाषामा यसलाई "रब" भनिन्छ । अर्थात ईश्वर विष्णु, पालनहार तथा रब हुन् । त्यसैले ईश्वरलाई विष्णु भनी सम्बोधन गर्न सकिन्छ र तर यदि कसैले "विष्णु" नै सर्व-शक्तिमान ईश्वर हुन् जसका चारबटा हातहरू छन्, जसमध्ये एक हातमा 'चक्र' तथा अर्को हातमा 'शंख' रहेको छ, जो पंछीको सवारी गर्दछन् तथा नागको सिंहासनमा विराजमान छन्" भन्छन् भने यो फेरी पनि वेद र कुरआनको दृष्टिमा अमान्य हुनेछ । त्यस्तै तपाईं यजुर्वेद, अध्याय ४० श्लोक ८ को विरूद्ध जाँदै हुनुहुन्छ जसमा भनिएको छ- "परमात्मा स्नायु तथा शरीररहित छन"

- यजुर्वेद, अध्याय ४०, श्लोक १६ मा वर्णन गरिएको छ-

"तिमी नै सत्मार्गतिर लैजाउ, हामीलाई कुटिल आचरण भएका शत्रु र पापबाट मुक्त राख" ।

- यस्तै भनाइ पवित्र कुरआनको सूरह फातिहा, अध्याय १, श्लोक ६ र ७ मा रहेको छ ।

*"इह्दिनस्सिरातल मुस्तकीम, सिरातल्लजीन-अन्अम्त अलैहिम्,*
*गैरिल मग्‌जूबि अलैहिम् व लज्जाल्लीन"* ।

अर्थात "हामीलाई सीधा मार्ग देखाउ ! ती व्यक्तिहरूको मार्ग देखाउ जो तिम्रा कृपापात्र भए, न कि तिम्रा प्रकोपका भागी भएका, न पथभ्रष्ट भएकाहरूको मार्ग नै ।

- ऋग्वेद, छैठौं मण्डल, सूक्त ४५, श्लोक १६ मा भनिएको छ-

*"य एक इत्तमु ष्टुहि"*

"जो सर्वेसर्वा र अद्वितीय, अनुपम छन्, उनको पुजा गरौं" ।

- वेदान्तको ब्रम्ह सूत्रः

*"एकम ब्रह्म, द्वितिय नास्ते नेन ना नास्ते किन्चन"*

अर्थात "ईश्वर एक मात्र छन्, दोश्रो छैनन्, छँदै छैनन्, कण बराबर पनि छैनन्" ।

यसबाट के निष्कर्षमा पुगिन्छ भने हिन्दू धर्म-ग्रन्थहरूको गहन अध्ययन तथा विश्लेषण पश्चात मात्र हिन्दू - धर्ममा ईश्वर प्रतिको सही धारणा बारे जानकारी, प्राप्त गर्न सकिन्छ ।

# धर्मग्रन्थहरूमा देवदूत (फरिश्ता) बारेको धारणा

## हिन्दू-धर्ममा देवदुतको वर्णनः

हिन्दू धर्ममा देवदूतहरू प्रतिको धारणा रहेको पाइन्छ । तर पनि समाजमा यस्ता केही अद्‌भूत शक्तिहरूको वर्णन हुने गर्दछ जसले गरेका कार्य सर्व-साधारण मानवहरू गर्न सक्दैनन् वा जो सर्व-साधारण मानवद्वारा कठिन छ, त्यस्ता व्यक्तित्वहरू पनि देवी देवताकै रूपमा पूजिन्छन् ।

## हिन्दू धर्ममा अवतारवाद

हिन्दू धर्ममा ईश्वरका सन्देष्टाहरू प्रतिको धारणा रहेको पाईदैँन । तर पनि उनीहरूमा सन्देष्टा तथा ईशदूतत्वसँग मिल्दोजुल्दो अवतारवादको धारणा भने रहेको पाइन्छ । 'अवतार' एक संस्कृत शब्द हो जसमा 'अव' भन्नाले 'तल' र 'तार' भन्नाले 'छुट्नु' । अत 'अवतार'को अर्थ 'तल आउनु' अर्थात 'अवतरण' हो । अक्सफोर्ड डिक्सनरीका अनुसार अवतार (हिन्दू धर्मग्रन्थानुसार) भन्नाले मानिसको रूपमा देवी देवताको आगमन (अवतरण) हो । सरल भाषामा भन्नुपर्दा सर्व शक्तिमान ईश्वर स्वयं मानिसका रूपमा तल (पृथ्वीमा) आउनु नै अवतार हो ।

हिन्दू धर्ममा ईश्वर स्वयं यस पृथ्वीमा विभिन्न शरीर धारण गरी धर्मको रक्षा गर्न तथा मानिसहरूलाई नीति नियम सिकाउन र एक उदाहरण प्रस्तुत गर्नका निमित्त आउने गर्दछन् भन्ने विश्वास रहेको छ ।

वेदहरूमा 'अवतार' को सम्बन्धमा केही वर्णन भएको पाइदैँन । पवित्र हिन्दू लेखहरू श्रुति र स्मृति लेखमध्ये स्मृति लेख अन्तर्गत पर्ने पुराण र इतिहासमा यसको वर्णन भएको पाइन्छ ।

'अवतार' बारेको वर्णन हिन्दू धर्मग्रन्थ भागवद् गीता, अध्याय ४, श्लोक ७-८ मा यसरी गरिएको छ -

"हे भरतवंशी ! जहाँ जहाँ र जहिले जहिले धर्मको पतन र अधर्मको उन्नति हुन लाग्छ त्यस बखत त्यस ठाउँमा म अवतार लिन्छु"

भक्तहरूका उद्धारका लागि, दुष्टहरूको विनाशका लागि र धर्मको पुनः स्थापना गर्नका लागि म हरेक युगमा प्रकट हुन्छु"

यसरी भागवत गीताका अनुसार ईश्वर भक्तहरूको उद्धारका लागि अवतारको रूपमा प्रकट हुन्छन् ।

पुराणमा सयौं अवतारहरू बारे वर्णन भएको पाइन्छ, तर विष्णु पालनहारका १० अवतार रहेको वर्णन गरिएको छ, जसमा-

- मत्स्यअवतार - माछाको रूपमा
- कुर्मअवतार - कछुवाको रूपमा
- वराहअवतार -सुँगुरको रूपमा
- नरसिंहअवतार - दैत्यको रूपमा (आधा शरीर मानव-आधा सिंह)
- वामनअवतार - ब्राह्मण वामनको रूपमा
- परशुरामअवतार - परशुरामको रूपमा
- रामअवतार - रामको रूपमा
- कृष्णअवतार - कृष्णको रूपमा
- बुद्धअवतार - गौतम बुद्धको रूपमा
- कल्कीअवतार - कल्कीको रूपमा

(ऋग्वेद संहिता, खण्ड XII, पाना ४३०९-स्वामी सत्यप्रकाश सरस्वती र सत्यकर्म विध्यालंक)

## इस्लाम धर्ममा फरिश्ता

फरिश्ताहरू पनि अल्लाहका सृष्टि हुन् । फरिश्ता अल्लाहका विशेष सृष्टि हुन् जसले अल्लाहको सन्देश मानवसम्म ल्याएर दिन्छन् । उनीहरू आवश्यकतानुसार अल्लाहको आदेशमा रूपधारण गर्न सक्छन् । उनीहरू प्रकाशबाट उत्पन्न भएका हुन्छन् र अदृश्य हुन्छन् । फरिश्ताहरू आफ्नो इच्छाले कुनै कार्य गर्न सक्दैनन्, उनीहरू केवल अल्लाहको आदेश बमोजिम कार्य गर्दछन् । विभिन्न फरिश्ताहरू भिन्ना-भिन्नै कार्यका लागि अल्लाहद्वारा नियुक्त गरिएका हुन्छन् । जस्तै- फरिश्ता जिब्राइलको नियुक्ति पैगम्बरहरूलाई अल्लाहको प्रकाशना पुऱ्याउनु रहेको थियो । फरिश्ता मिकाईल, फरिश्ता इज्राईल तथा फरिश्ता इस्राफीलले क्रमशः प्राण हर्ने, वर्षा गराउने र प्रलयको समय विगूल (शंख) फुक्ने कार्य गर्दछन् आदि ।

## इस्लाममा ईशदूतप्रतिको अवधारणा

संसारमा मानव जीवनलाई सफल बनाउनका निम्ति मात्र ईन्जिनियर, गणितज्ञ, वैज्ञानिक, राजनीतिज्ञ, वकिल र अर्थशास्त्रीहरू भएर काम चल्दैन । यी बाहेक अर्को एक थरीको मानिस पनि हुन नितान्त आवश्यक छ जसले ईश्वरीय मार्ग बताउन सकून् । अरु व्यक्तिहरूले यस संसारमा मानिसका लागि के के छन् र तिनलाई कसरी काममा ल्याउन सकिन्छ आदि कुरा बताउन सक्छन् तर मानिस स्वयम् के का लागि हो ? मानिसलाई संसारमा विविध सामाग्री प्रदान गर्ने को हुन् र ती दाताको इच्छा के छ ? यस्तो प्रश्नको उत्तर दिने विशेष व्यक्तिहरूको आवश्यकता पनि छ । यिनै ब्यक्तिहरूको निर्देशन अनुसार संसारमा जीवन व्यतीत गरेर सदाका निम्ती सफलता प्राप्त गर्न सक्छन् । यो मानिसका निम्ति सबैभन्दा ठूलो र वास्तविक आवश्यकता हो । जुन ईश्वरले हाम्रो सानो भन्दा साना खाँचो पनि टारिदिने प्रवन्ध गरे उनले यस्तो महत्वपूर्ण आवश्यकता पूरा गर्ने काममा असावधानी देखाए होलान् भन्ने कुरामा कसैको विश्वास हुँदैन । एक-एक विद्या र विज्ञानमा विशेष योग्यता भएका व्यक्तिहरूलाई जसरी ईश्वरले बनाएका हुन् त्यसै गरी स्वयम् ईश्वरलाई चिन्ने उत्तम योग्यता भएका व्यक्तिहरू पनि उनले सृजना गरेका हुन् । उनीहरूलाई ईश्वरले धर्म, नैतिकता र विधिशास्त्र (शरीअत) को ज्ञान दिए । केहि मानिसलाई शिक्षा दिने काममा नियुक्त गरे । हाम्रो भाषामा यस्ता व्यक्तिहरूलाई नबी, रसूल, पैगम्बर अर्थात ईशदूत वा सन्देष्टा भनिन्छ ।

सरल भाषामा भन्नुपर्दा जब जब सृष्टिमा अज्ञानता, विकृति, विध्वंस आदिले सीमा नाघ्छ तब सृष्टि अनि मानवताको रक्षा तथा मार्गनिर्देश गर्नका निमित्त ईश्वरले मानव मध्येबाटै कुनै विशिष्ट व्यक्तिको चयन गरी आफ्ना वाणी तथा सन्देशहरू मानवसमक्ष पुऱ्याउने गर्दछन् । यिनै ईश्वरका सन्देश लिई आउने मानवलाई नै ईशदूत भनिन्छ । कुरआन अनुसार विश्वमा हरेक युग, जाति तथा समूदायमा सचेतक पठाइए । ती सबै ईशदूत, सचेतक आदि सोही युग तथा समुदाय वा राज्यका लागि मात्र सीमित रहे भने मुहम्मद (स.) पूरै विश्व तथा सम्पूर्ण मानवताकै निम्ति पठाइएको कुरा कुरआनले पुष्टि गर्दछ । आदम पहिलो मानव एवं ईशदूत थिए भने मुहम्मद (स.) सबै ईशदूतहरूका समापक हुनुहुन्छ । अर्थात उहाँ पछि अब कुनै दूत आउने छैनन् र यस्तो दाबी गर्ने व्यक्ति झुठा मात्र हुन सक्छ ।

# मुहम्मद (स.) हिन्दू धर्मग्रन्थहरूमा

## १. मुहम्मद (स.) भविष्य पुराणमा :-

- भविष्य पुराण को (प्रतिसर्ग पूर्व ३, अध्याय ३ खण्ड ३ कलियुगीतिहास समुच्चय) मा भनिएको छ-

*"एतस्मिन्नन्तरे म्लेच्छ आचार्येज शमन्वितः ।*

*महामद इति ख्यातः शिष्य शाखा समन्तिव : ॥......*

"एउटा अर्के देशमा एक आचार्य आफ्ना साथीहरूसित आउने छन् । तिनको नाम मुहम्मद हुनेछ । तिनी मरूभूमि क्षेत्रमा आउनेछन् । राजा भोज मरुस्थल( मरूभूमी) निवासी महादेवको दरबारमा आफ्नो सम्पूर्ण पापहरू पखाली गंगा स्नान गरे पश्चात अनुरोध गर्नेछन्- "हे मानवका गौरब अरबबासी तिमीले शैतान (शत्रु) हरूको विनाशको निम्ति एक विशाल दल जम्मा गरेका छौं र तिमी स्वयं ती शत्रुहरूबाट सुरक्षित रहने छौं" ।

**पूर्व कथनानुसार**

- तिनको नाम मुहम्मद हुनेछ ।
- तिनी मरूभूमि क्षेत्रमा आउने छन् ।
- तिनका साथी (सहाबा) हरू धेरै  हुनेछन् । (उनका जति साथी (शुभचिन्तक)हरू अरू नबी तथा सन्देष्टाहरूका थिएनन् ।)
- मुहम्मद (स.) सम्पूर्ण मानवजातिकै आर्दश हुन् (परवतीस नाथ) । पवित्र कुरआनको सूरह अल-कलम, अध्याय ६८, श्लोक ४ ले यस कुरालाई पुष्टि गरेको छ - अनि निस्सन्देह तिमी महान स्वभाव भएका हौ" । त्यस्तै सूरह अल्-अहजाब, अध्याय ३३, श्लोक २१ मा भनिएको छ- "हे मानव ! निश्चय नै तिमीहरूका लागि अल्लाहका दूत (मुहम्मद) मा उत्तम आदर्श रहेको छ" ।
- उनले मूर्ति पुजनको उन्मूलन तथा सबै किसिमका पापहरू (शैतानी लक्षणहरू)को अन्त्य गर्नेछन् ।
- सन्देष्टा मुहम्मद (स.) लाई शत्रुहरूबाट संरक्षण प्रदान गरिनेछ ।

ती सन्देष्टाले पञ्चगव्य मिश्रित गंगा जलले स्नान गरेका हुनेछैनन् । जबकि गंगाजललाई हिन्दू धर्मावलम्बिले एक पवित्र जल, जसमा स्नान गर्दा सबै किसिमका पापहरू पखालिन्छन् भन्ने धार्मिक विश्वास राख्दछन् । यहाँ भविष्यवाणीले यो पनि जनाएको छ कि मुहम्मद (स.) पाप रहित अर्थात निस्पाप हुनेछन् ।

- भविष्य पुराणको प्रतिसर्ग, पार्व ३, खण्ड ३, श्लोक २३-२७ मा महाऋषि व्यासले लेखेका छन् -

*“रात्रो स देवरूपश्य बहुमायाविशारद ।*
*पैशाचं देहमास्थाय भोजराजं ही सोडब्रवीता ॥२३॥*
*आर्य धर्मो ही ते राजन सर्व धर्मोत्तमः स्मृतः ।*
*ईशाज्ञया करिष्यामि पैशाचं धर्म दारूणम ॥२४॥*
*लिगंच्छेदी शिखाहीनः श्मश्रूधारी स दूषकः ।*
*उच्चालापी सर्वभक्षी भविष्यति जनों मम ॥२५॥*
*बिना कौलं च पशवस्तेषां भक्ष्या मता मम ।*
*मुसलेनैव संस्कारः कुशैरिव भविष्यति ॥२६॥*
*तस्मान्मुसलवन्तो हि जातयो धर्मदूषकः ।*
*इति पैशाचधर्मश्च भविष्यति मया कृतः ॥२७॥”*

अर्थात्: रात्रीमा कुनै फरिश्ता (देवदूत) आई राजा भोजलाई सम्बोधन गरी भने-

“हे राजन ! यद्यपि तिम्रो आर्य धर्म उत्तम छ तापनि यसलाई पैशाचधर्मको नामबाट ईश्वरको आज्ञाले स्थापित गर्नेछु, लिंगच्छेद गरिएका, शिखाहीन (टुप्पी नभएका), दाह्री भएका, ठूलो स्वरमा अलाप यानी प्रार्थना (अजान) गर्नेहरू, मेरा खास पहिचान भएका मानिसहरू हुनेछन् । शुद्ध पशुको मात्र आहार गर्ने तर विना कौल अर्थात मन्त्रबाट पवित्र नगरी कुनै पशु (भक्ष्य) खान योग्य हुने छैन । मुसल संस्कारको अनुसरण गर्ने छन् (अर्थात मुसलमान हुनेछन्) । उनीहरूबाटै मुसलवन्त (निष्ठावान) वर्गको धर्म फैलिने छ, जसबाट पैशाच धर्मको अन्त्य हुनेछ ।”

- मुहम्मद (स.)लाई ब्रम्हाको संज्ञा दिइयो जसले अज्ञानीहरूलाई सत्यताको जानकारी गराई सत्मार्ग तर्फ लैजानेछन् ।
- भारतीय राजालाई अरब जानु पर्ने आवश्यकता थिएन किनकी उनको शुद्धिकरण भारतमा नै मुसलमानहरूको आगमन पश्चात हुनेछ ।

- पूर्व कथित सन्देष्टाको आगमन पश्चात एकेश्वरवाद (तौहिद) बारे चेतना फैलाउने छन् र कुमार्गतिर लम्केकाहरूलाई सुधार्ने छन् ।
- अन्तिम सन्देष्टाका अनुयायीहरू लिंगच्छेद गरिएका, शिखाहीन (टुप्पी नभएका), दाह्री भएका र ठूलो स्वरमा प्रार्थना (अजान) गर्नेछन् । उनीहरूले ठूलो परिवर्तन (क्रान्ति) ल्याउनेछन् ।
- उनीहरूले बैध (हलाल) वस्तु तथा पशुहरू मात्र खाने छन् । सुंगुर खाने छैनन् । पवित्र कुरआनका यी सूरहहरूले यस कुराको पुष्टि गर्दछन् ।

  सूरह अल्-माइदह् अध्याय ५ श्लोक ३ मा भनिएको छ-

"तिमीहरूका लागि अवैध गरिएका छन्-मृत पशु, रगत, सुँगुरको मासु र अल्लाह बाहेक अरू कसैको नाममा वध गरिएका पशुहरू ।" यस्तै भनाइ सूरह अल-बकरह्, अल-अन्आम र अल-नहल् मा पनि रहेको छ ।"

- तिनीहरू शुद्धता हासिल गर्नका लागि विशेष किसिमको घाँस (दुबो)को प्रयोग गर्ने छैनन्, जसरी हिन्दू धर्ममा गरिन्छ, बरू पाप तथा अधर्मीहरूको नाशको निम्ति युद्ध गर्नेछन् ।
- तिनीहरूलाई मुसलमान भनिने छ ।
- तिनीहरूका राष्ट्र मांसाहारी हुनेछन् ।
- वैध (कुरआनद्वारा) गरिएका शाकाहारी पशु मात्र खानेछन् । सो कुराको पुष्टि पवित्र कुरआनको सूरह माईदह, अध्याय ५, श्लोक, १ तथा सूरह मोमिनून, अध्याय २३, श्लोक २१ मा गरिएको छ ।

  सूरह माइदह, श्लोक '१' मा भनिएको छ

"हे आस्थावानहरू हो ! आफ्नो प्रतिबद्धता तथा वचनहरू पुरा गर । तिमीहरूका लागि शाकाहारी पशु वैध गरिएका छन् ।"

## २. मुहम्मद (स.) वेदहरूमा :

- अर्थववेद, बिसौं मण्डल, सूक्त १२७ :-

केही सूक्त (अध्याय) लाई कुन्तप सूक्त भनिन्छ । कुन्तप भन्नाले दुःख र कष्ट नाशक बुझिन्छ । यसर्थ कुन्तप भनेको शान्ति र सुरक्षाको सन्देश हो जसलाई अरबी भाषामा इस्लाम भनिन्छ ।

कुन्तपको अर्को अर्थ हुन्छ पेटभित्र गुप्त रहेका ग्रन्थिहरू । यी मन्त्रहरूलाई गुप्त भनिनुको कारण यसका सत्य सन्देशहरू गुप्त रहेका थिए जुन भविष्यमा प्रकट हुनुपर्ने थियो । यसका गोप्य अर्थहरू मध्ये एक नाभिकेन्द्र अथवा पृथ्वीको केन्द्र बिन्दुसँग पनि सम्बन्धित रहेको छ । मक्कालाई ''उम्मुल कुरा'' शहरहरूका माता अथवा पृथ्वीको नाभिकेन्द्र हो भनी धेरै पुस्तकहरूमा भनिएको छ । यो ईश्वरको भक्ति तथा उपासना गर्ने पहिलो गृह हो जहाँ सर्वशक्तिमान ईश्वरले यस संसारलाई आत्मिक ज्ञान प्रदान गरे । सो को पुष्टि पवित्र कुरआन को सूरह आले-इमरान, अध्याय ३, श्लोक ९६ ले गरेको छ -

*''इन्न अव्वल बैतिन वुजिअ लिन्नासि लल्लजी बिबक्कत*
*मुवारकन् व हुदल लिल् आलमीन''*

अर्थात ''निस्सन्देह पहिलो घर जुन मानिसहरूका लागि निर्धारित गरिएको थियो, त्यो मक्कामा रहेको छ, यो सम्पूर्ण संसारवासीहरूका लागि मंगलमय तथा मार्गदर्शक हो" । मक्कालाई बक्का पनि भनिन्छ ।

*''नराशंस मिहप्रिय मस्यियज्ञ ...... (ऋग्वेद संहिता १:१३:३)*

अनुवाद ''नराशंस सबैका प्रिय हुनेछन तथा प्रशंसा गरिनेछन्''

वेदहरूमा मुहम्मद (सल्ल.)का विषयमा व्याख्या तथा विश्लेषण गर्नु अगाडि नराशंसको विषयमा जानकारी हासिल गर्न आवश्यक हुन्छ । 'नराशंस' शब्दको अर्थ विभिन्न विद्वानले विभिन्न प्रकारले गरेका छन् । तर हरेक शब्दको सहि अर्थ खोज्दा त्यसको वातावरण र सन्दर्भमा भेदभाव नराखी अर्थात निष्पक्ष ढंगबाट गरिएको खण्डमा सहि अर्थ आउने कुरालाई नकार्न मिल्दैन ।

नराशंस शब्द 'नर' र 'आशंस' दुई शब्दबाट बनेको छ । 'नर' को अर्थ मनुष्य र 'आशंसको' अर्थ प्रशंसित हुन्छ । अर्थात् 'आशंस' शब्द लौकिक भाषाको नभई वैदिक भाषाको हो, जसको अर्थ केही व्यक्तिले मनुष्यको प्रशंसा तथा केहीले मनुष्यद्वारा प्रशंसित गरिनु भनेका छन् ।

मुहम्मद शब्द 'हम्द' धातुबाट बनेको हो जसको अर्थ प्रशंसित हुन्छ ।

*''इँद्र जना उपश्रुत नराशंसः स्तविष्यते'' (अथर्ववेद संहिताः*
*२०/१२७/१)*

'हे मनुष्य ! यो आदरपूर्वक सुन कि नराशंसको प्रशंसा गरिने छ'

यो श्लोक अथर्ववेदको हो जुन चारैवटा वेदहरूमध्येको अन्तिम वेद हो। जसबाट यो स्पष्ट हुन्छ कि नराशंस अथर्ववेदमा लेखिसकेपछिको कुनै कालमा आउने छन् र दोस्रो कुरा उनको सवारी ऊँट हुने कुराको भविष्यवाणी पनि रहेको छ।

*"उष्ट्रा यस्य प्रवाहणो ....." (अर्थर्ववेद २०:१२७:२)*

यसबाट यो स्पष्ट हुन्छ कि नराशंस यस्तो समयमा आउने छन् जुन बेला सवारीको रूपमा ऊँटहरूको प्रयोग हुनेछ।

- वेदहरूमा नराशंसका विशेषताका भविष्यवाणीहरू:

वेदहरूमा नराशंसका विषयमा उनका विशेषताहरूको विस्तारपूर्वक उल्लेख गरिएको छ। जुन यस प्रकार रहेको छ

१) नराशंस मिहप्रिय मस्यियज्ञे ....... (ऋग्वेद संहिता १:१३:३)

अनुवाद - "नराशंस सबैका प्रिय हुनेछन् तथा प्रशंसा गरिनेछन्"

२) उष्ट्रा यस्य प्रवाहणो ...... (अर्थर्ववेद २०:१२७:२)

अनुवाद - "नराशंसले सवारीको रूपमा ऊँटको प्रयोग गर्नेछन्"

यसबाट यो स्पष्ट हुन्छ कि उनी भारतीय ऋषि नभई मरूभूमिमा जन्मने तथा सो स्थानकै बासिन्दा हुन् भन्ने बुझिन्छ किनभने ब्राह्मणलाई ऊँटको सवारी गर्न निषेध गरिएको कुरा मनुस्मृतिको अध्याय ११, श्लोक २०१ ले पुष्टि गर्दछ।

*"उष्ट्रयानं समारूह्य खरयानंतु कामतः।*

स्नात्वा तु विप्रो दिग्वासाः प्राणयामेन शुहयति॥२०१॥

अनुवाद - "आफूखुशी वा जानीकनै ऊँट या गधामाथि चढ्ने र नाङ्गै नुहाउने ब्राह्मण केवल प्राणायाम गर्नाले मात्र शुद्ध हुन्छ।"

३) ".......... मधुजिहंव हविष्कृतम्।' (ऋग्वेद संहिता १:३:२)

अनुवाद "नराशंसलाई परोक्ष ज्ञान दिइनेछ।" (परोक्ष-ईश्वर प्रदत्त ज्ञान)

४) नराशंसप्रति धामान्यजन तिस्प्रो दिवः प्रतिमहा स्वर्चिः। (ऋग्वेद २:३:२)

अनुवाद -"नराशंस अत्याधिक सुन्दर एवं ज्ञानको प्रसारक हुनेछन्"

---

यस मन्त्रानुसार नराशंसलाई परोक्ष ज्ञाता भनिएको छ। मुहम्मद (सल्ल.)लाई परोक्ष ज्ञान दिइएको कुरा कुरआनले स्पष्ट गर्दछ। १,४२९ वर्ष अघि अरबबासीहरू अज्ञानताको घोर अन्धकारमा थिए -यौमुल जाहिलियुयह)। मुहम्मद (सल्ल.) ले आफ्नो सन्देश तथा ज्ञानले विकास, शान्ति तथा उन्नति ल्याउन सफल भए तथा उनले गरेका भविष्यवाणीहरू समेत सत्य सावित भएका छन्।

स्वर्चि शब्दको विच्छेद ' शोभना अर्चिईस्य सः ' अर्थात सुन्दर दीम्ति या कान्तिले युक्त हो । 'स्वर्चि' शब्दको अभिप्राय अत्यन्त सुन्दर व्यक्तित्वका धनी तथा प्रत्येक घरलाई प्रकाशमान पार्ने हो ।

५) 'नराशंस वाजिन वाजयत्रिह ..... (ऋग्वेद १:१०६:४)

अनुवाद - "नराशंसले मनुष्यलाई पाप मुक्त गर्नेछन्"

मुहम्मद (सल्ल.) आउनु अगाडि अरबका बासिन्दाहरूको अवस्था अन्यन्त भयावह थियो । मानिसमा शिष्टता तथा नैतिकता कण बराबर पनि थिएन । अज्ञानता, बर्बरता, हिंसा, शोषण, मदिरापान, जुवा, चोरी, रक्तपात आदिले व्याप्त थियो । हजरत मुहम्मद (स.) नै हुन् जसले मनुष्यहरूका आचारणमा सुधार ल्याए तथा पूर्ण रूपले मनुष्यलाई पाप मुक्त गराए । जुन घटनाको साक्षी इतिहास रहेको छ ।

६) 'एष इषाय मामहे ..... (अथर्ववेद २:१२७:६)

अनुवाद - 'नराशंसका एक सांसारिक नाम मामहे हुनेछ ।"

यस मन्त्रमा ऋषिलाई "मामहे" नामले सम्बोधन गरिएको छ । कुनै पनि भारतीय ऋषिहरू तथा अरू सन्देष्टाहरूलाई सो नामले सम्बोधन गरेको पाइदैँन । जसको वेदहरूमा उल्लेख गरे अनुसार संसारभर प्रशंसा गरिएको होस् । "मामहे" शब्दको मूल 'माह' हो, जसको अर्थ महान हुन्छ । केही संस्कृत पुस्तकहरूमा महामद नाम पनि वर्णन भएको देखिन्छ तर संस्कृत व्याकरणका अनुसार यस शब्दको अन्य अर्थ पनि लाग्न सक्छ । वास्तवमा 'मामह' शब्दका केही अर्थहरू छन् जुन धेरै वा थोरै मुहम्मद (सल्ल.) शब्दसँग उच्चारण सहित मिलेको छ ।

७. 'नराशंस सध घ्रृष्टम मपश्यं सप्रघस्तमम् । दिवोन सधाम स्वसम्" । (ऋग्वेद १:१८:९)

अनुवाद - "प्रतापी विख्यात तथा यशस्वी मनुष्यद्वारा स्तुति गरिने अग्निलाई मैले देखें ।

८. 'नराशंस सुषूदतीम यज्ञमदाम्यः कविर्हिमधुहस्त्यः । (ऋग्वेद ५:५:२)

अनुवाद - "सबै मनुष्यद्वारा प्रशंसाको योग्य अग्नि हाम्रो यज्ञलाई प्रज्वलित गर्ने उनी अग्नि कर्म, कुशल, विद्वान छन् ।"

९. एष इषाय मामहे शतं निष्कान् ..... (अथर्ववेद २०:१२७:६)

अनुवाद - "नराशंसलाई एक सय स्वर्ण मुद्रा प्रदान गरिनेछ ।'

निष्कान्‌को अर्थ स्वर्ण मुद्रा हो । स्वर्ण मुद्रा जसले मनुष्यलाई आपतकालीन अवस्थामा मद्दत गर्दछ । यस मन्त्रमा स्वर्ण मुद्राहरू प्रदान गरिनुको अर्थ यस्ता श्रेष्ठ व्यक्तिहरू हुन्‌ जो रत्न भैं महत्वशाली छन्‌ । जसले मक्काको कष्टपूर्ण जीवनमा वहाँ (मुहम्मद स.) लाई साथ दिए तथा उहाँले दिने शिक्षाको प्रचार प्रसार एवं ती उपदेशहरूको संरक्षण पनि गर्दथे ।

१०. "एष इषाय मामहे शतं निष्कान्‌ दश स्रजः ।" (अथर्ववेद २०:१२७:६)

अनुवाद - "नराशंस दस मालाहरूले युक्त हुनेछन्‌ ।"

यस मन्त्रमा नराशंलाई दस माला 'स्रज' प्रदान गरिनुको अर्थ यस्ता दस व्यक्तिहरू तिरको संकेत हो जो नराशंसका अति नै प्रिय हुनेछन्‌ । मुहम्मद (स.)का दस सहावाहरू यस्ता थिए जसले उनलाई आफ्नो प्राणभन्दा बढी चाहन्थे । यिनै दस व्यक्तिहरू सधैं मुहम्मद (स.) का वरिपरी हुने गर्दथे । यी व्यक्तिहरू मुहम्मद (स.)का गलाका हार भैं थिए । ती दसै जनालाई "अश्र्-ए-मुबश्शरा" भनिन्छ । "अशरह" को अर्थ दस तथा 'मुबश्शरा' को अर्थ 'शुभ संवाद सूचित' हो । मुहम्मद (स.) ले ती दस साथी (सहाबी)हरूलाई यस संसार मै स्वर्ग जाने शुभ समाचार दिनुभएको थियो । ती साथीहरूका नाम यसप्रकार छन्‌ (१) अबू बक्र बिन अबू कुहाफा (२) उमर बिन खत्ताब (३) उस्मान बिन अफ्फान (४) अली बिन अबू तालिब (५) तल्हा बिन ओबैदुल्लाह (६) जुबैर बिन अव्वाम (७) सअद बिन अबू वक्कास (८) सईद बिन जैद (९) अब्दूर्रहमान बिन औफ  (१०) अबू उबैदा बिन जर्राह ।

११. "वीणि शतान्यर्वता सहस्रा दश गोनाम्‌" (अथर्ववेद २०:१२७:६)

अनुवाद - "नराशंस दस हजार गाईले युक्त हुनेछन्‌"

संस्कृत शब्द 'गौ' को मूल 'गम' हो जसको अर्थ 'युद्धको निम्ति जानु' हो । गाईलाई 'गौ' भनिन्छ । जुन युद्धको साथै शान्तिको प्रतीक मानिन्छ । त्यस्तै दश हजार गाईहरू प्रदान गरिनुको संकेत असल सहकर्मीहरू दिइने तर्फ छ । जो गाई भैं असल, श्रेष्ठ तथा गोरू भैं शक्तिशाली हुनेछन्‌ । जसले मुहम्मद (स.) लाई 'फत्‌हे मक्का' मक्काको विजय यात्रामा साथ दिए । सो युद्ध मानव इतिहास कै एकमात्र यस्तो युद्ध थियो जहाँ रगत बगेन न त विपक्षीहरूलाई कुनै कष्ट नै दिइयो । मुहम्मद (स.) तथा उनका दश हजार सहकर्मीहरूले हतियारहरूको प्रयोग बिना नै सो युद्धमा विजय हासिल गरे । मुहम्मद (स.) तथा ती वीर योद्धाहरू बारे युद्धको सदंर्भमा पवित्र कुरआनको सूरह फत्‌ह, अध्याय ४८, श्लोक

२९ मा वर्णन गरिएको छ -"मुहम्मद (स.) अल्लाहका दूत हुन् र उनको साथमा रहेका अनुयायीहरू अविश्वासीहरू प्रति कठोर र एक-आपसमा दयालु छन्" ।

१२. "उनलाई ३०० अरबी घोडाहरू प्रदान गरियो" (अथर्ववेद २०:१२७:६)

उनलाई तीनसय अरबी घोडा दिनुको अर्थ वीर योद्धाहरू प्राप्ति हो जुन घोडा जस्तै तेज हुन्छन् । "अर्वन" शब्दको शाब्दिक अर्थ तेज अरबी घोडा हुन्छ । बद्रको लडाईमा मुहम्मद (स.) का साथीहरू (योद्धाहरू) को संख्या तीन सयको हाराहारीमा थियो । सो युद्धमा पनि मुहम्मद (स.) तथा उनका योद्धा साथीहरूको विजय भयो जब कि विपक्षीहरू तीन गुणा ज्यादा थिए ।

यी माथिका वेदका श्लोकहरूबाट नराशंस 'प्रिय', 'मधुजिहवं' अर्थात मधुर भाषित, बुद्धिमान या प्रशंसनीय अनि सन्त हुन् भनी व्याख्या गरिएको छ ।

## ३. मुहम्मद (स.) उपनिषद्हरूमा

उपनिषद्हरूमा पनि मुहम्मद (स.) र इस्लामको जतातत्तै उल्लेख गरेको पाइन्छ । नागेन्द्र वसुद्वारा सम्पादित विश्वकोषको द्वितीय खण्डमा उपनिषद्हरूका ती श्लोकहरू दिइएका छन् जुन इस्लाम र सन्देष्टा मुहम्मद (स.) सित सम्बन्धित छन् ।

पाठकवृन्दहरूलाई वास्तविकताबारे जानकारी प्राप्त होस् भन्ने उद्देश्यले यसका केही प्रमुख श्लोक र तिनका अर्थ प्रस्तुत गर्दछु ।

*"अस्माल्लां इल्ले मित्रवरूणा दिव्यानि धन्ता ।*
*इल्लल्ले वरूणो राजा पुनर्दुद : ।*
*हयामित्रो इल्लां इल्लल्ले इल्लां वरूणे मित्रस्तेजस्काम : ॥१॥*
*होतारमिन्द्रो होतारमिन्द्र महासुरिन्द्रा : ।*
*अल्लो ज्येष्ठं परमंपूर्ण ब्रह्माणं अल्लाम् ॥२॥*
*अल्लो रसूल महामद रकाबरस्य अल्लो अल्लाम् ॥३॥*

(अल्लोपनिषद् १,२,३)

अर्थात यस देवताको नाम अल्लाह हो । उनी एक छन् । मित्र वरूण आदि उनका विशेषताहरू हुन् । वास्तवमा अल्लाह वरूण हुन् जो सम्पूर्ण सृष्टिका राजा हुन् । पूज्य त्यस अल्लाहलाई आफ्नो साथी संझ । उनी वरूण हुन् र एक मित्रले जस्तै उनी सम्पूर्ण मानिसहरूका काम सम्भाल्छन् । उनी इन्द्र हुन्, श्रेष्ठ इन्द्र । अल्लाह सबैभन्दा ठूला, सबै भन्दा राम्रा, सबैभन्दा बढी पूर्ण र सबैभन्दा बढी पवित्र छन् । मुहम्मद (स.) अल्लाहका श्रेष्ठत्तर सन्देशवाहक हुन् ।

उपयुक्त भनाइहरूबाट यो निर्विवाद रूपमा स्पष्ट हुन्छ कि सर्वशक्तिमान अल्लाह एक छन् र मुहम्मद (स.) उनका सन्देष्टा (पैगम्बर) हुन् । यस उपनिषद्का अन्य श्लोकहरूमा पनि इस्लाम र मुहम्मद (स.) का विषयमा सम्बन्ध झल्काउने कुराहरू आएका छन् । यस उपनिषद्मा अगाडि भनिएको छ-

*'आदल्ला बूक मेककम् अल्लबूक निखादभ् ॥४॥*
*अल्लो यज्ञेन हुत हुत्वा अल्ला सूर्य्य चन्द्र सर्वनक्षत्रः ॥५॥*
*अल्लो ऋषीणं सर्व दिब्याँ इन्द्राय पूर्व माया परमन्तरिक्षा ॥६॥*
*अल्लः पृथिव्या अन्तरिज्ञं विश्वरूपम् ॥७॥*
*इल्लांकबर इल्लांकबर इल्ला इल्लल्लेति इल्लल्ला ॥८॥*
*ओम् अल्ला इल्लल्ला अनादि स्वरूपाय अथर्वण शयमा हुही*
*जनान पशून सिद्धान जलवरान् अदृष्टं कुरू फट ॥९॥*
*असुरसंहारिणी ह्रं हीं अल्लो रसूल महमदरकबस्य अल्लो अल्लाम्*
*इल्लल्लेति इल्लल्लति इल्लल्ला ॥१०॥*
*इति अल्लोपनिषद्*

अर्थात अल्लाहले सबै ऋषिहरूलाई पठाए र चन्द्रमा, सूर्य र ताराहरू उत्पन्न गरे । उनले आकाशलाई उत्पन्न गरे । अल्लाहले ब्रह्माण्ड (धर्ती र आकाश) लाई बनाए । अल्लाह श्रेष्ठ छन् । उनी बाहेक कोही पूज्य छैन । ए पूजारी ! भनिदेउ अल्लाह बाहेक कोही पूज्य छैन । अल्लाह अनादिदेखि छन् । उनी सारा विश्वका पालनकर्ता हुन् । उनी सम्पूर्ण विकृतिहरू र समस्याहरूलाई निर्मूल गर्नेवाला हुन् । मुहम्मद (स.) अल्लाहका रसूल हुन् जो यस संसारका पालनहार हुन् । त्यसैले घोषणा गर कि अल्लाह एक छन् र उनीबाहेक कुनै पूज्य छैन ।[1] (मुहम्मद (स.) धर्मग्रन्थहरूमा -डा. एम.ए.श्रीवास्तव)

---

(नोट-१-ज्यादै थोरैमात्र विद्वान जसको सम्बन्ध विशेष रूपमा आर्य समाजसित रहेको बताइन्छ, अल्लोपनिषद्को गणना उपनिषद्हरूमा गर्दैनन् तथा यसलाई उपनिषद् मान्न अस्वीकार गर्दछन् । जबकि तिनीहरूको तर्कमा कुनै शक्ति छैन । यस कारण पनि हिन्दू धर्ममा अधिकतर विद्वान र ऋषिमुनिहरू उपवादहरूको आग्रहमा ध्यान दिदैनन् । गीता प्रेस (गोरखपुर) को नाम हिन्दू धर्मका प्रमाणिक प्रकाशन केन्द्रका रूपमा अग्रगण्य छ । यसको विशेष प्रस्तुति "उपनिषद् अङ्क मा २२० उपनिषद्हरूको सूचि दिइएको छ । जसमा अल्लोपनिषद्को उल्लेख १५ औं नम्बरमा गरिएको छ । १४ औं नम्बरमा अमत विन्दुपनिषद् र १६ औं नम्बरमा अवधूतोपनिषद् (पद्य) उल्लेख गरिएको छ । डा. वेद प्रकाश उपाध्यायले पनि अल्लोपनिषद्लाई प्रमाणिक उपनिषद् मानेका छन् । (हेर्नुहोस् वैद्धिक साहित्यः एक विवेचना प्रदीप प्रकाशन पृष्ठ १०१, संस्करण १९९८) ।

## ● पुराण तथा वेदहरुमा अहमद र मुहम्मद शब्दको उपस्थित

### अहमद :-

*'वेदहमेतं पुरुष महान्तमादित्तयवर्ण तमसः प्रस्तात ..... यनाय ॥*
*(यजुर्वेद ३१:१८)*

अनुवाद - 'वेद अहमद महानतम पुरुष हुन्। सूर्यले झैं अन्धकारलाई परास्त गर्ने छन्। उनलाई जानेर बुझेमा मात्र मृत्युलाई पार गर्न सकिन्छ। यसको अलावा लक्ष्यसम्म पुग्ने अरू कुनै मार्ग छैन'।

'अहमिदि पितुष्परि मेघामृतस्य जगभ अहं सूर्य इवा जानी।' (भविष्य पुराण प्रतिसर्ग पर्व चतुर्थ अध्याय कलि कृतविष्णु स्तुतिः)

यस प्रकार 'अहमद्' को यति धेरै महत्व छ कि (ऋग्वेद ८/६/१०), (सामवेद २/६/८) तथा (अथर्ववेद २०/११५/१) मा सोही मन्त्र तथा शब्दको बारम्बार वर्णन गरिएको छ जसले केवल हजरत मुहम्मद (स.)लाई नै संकेत गर्दछ।

मुहम्मद (स.) को 'अहमद' नाम एक अरबी शब्द हो जसलाई धेरै अनुवादक/अनुवादिका मित्रहरूले गलत रूपमा बुझेका छन्, फलस्वरूप अहमत हुन गई यसको अनुवादमा परिवर्तन आउन गएको हो।

### मुहम्मद :-

*'अज्ञान हेतु कृत मोहमदान्धकार नाशं विद्यायं हित दो दयते*
*विवेक। (श्रीमद्भागवत पुराण २/७२)*

यहाँ स्पष्ट रूपले वर्णन गरिएको छ कि मुहम्मदद्वारा अन्धकारको नाश गरिन्छ तथा ज्ञान र विवेकको प्रकाश उदय हुनेछ।

हजरत मुहम्मद (स.)ले भन्नु भएको छ- 'मेरा अनेक नामहरू छन्। म मुहम्मद हुँ र अहमद हुँ। (बुखारी मुस्लिम)

## सारांश

१. माथिका श्लोकमा मुहम्मदको स्थानमा असल संस्कृतमा महामद शब्दको प्रयोग भएको छ र यसै श्लोकमा म्लेच्छ शब्द पनि प्रयोग भएको छ जुन गैर आर्य नस्लको निवासीहरूका लागि प्रयोग गरिएको छ। जसरी गैर

अरबका लागि अजम र गैर यहुदीका लागि 'जेन्टिल्स' शब्द प्रयोग गरिन्छ त्यसरी नै सो शब्दको प्रयोग गरिएको छ ।

२) यसै प्रकारले मुहम्मद (स.) का सम्बन्ध "मरूस्थल" सँग हुनेछ र संस्कृतमा 'मरूस्थल' शब्द भन्नाले रेगिस्तानीको भू-भाग भन्ने बुझिन्छ । मुहम्मद (स.) पनि रेगिस्तानी भूभागमा आउनु भयो । उहाँलाई बफादार (इमान्दार) साथीहरूका साथै फरिश्ताहरू (देवदूतहरू) को सहायता प्राप्त भयो ।

३) अर्को महत्वपूर्ण बूँदा यो हो कि उनले मूर्ति पुजाको उन्मुलन गर्नेछन् तथा मानवजातिको लागि उपकारक हुनेछन् । अतः हजरत मुहम्मद (स.) ले पनि मूर्ति पूजा प्रथा छोडेर एकेश्वर (अल्लाह) को भक्ति गर्ने शिक्षा दिनुभयो तथा मानवजाति कै उपकारक सिद्ध हुनुभयो ।

यस प्रकार उपर्युक्त सबै गुणहरू केवल हजरत मुहम्मद (स.) माथि सिद्ध हुन्छन् । यी तथ्यहरूको विस्तृत व्याख्या भविष्य पुराण भाग ३, खण्ड ३, अध्याय ३, श्लोक ५-८ मा गरिएको छ । (अन्तिम सन्देष्टा -मुफ्ती मो. सखर फारूकी नदवी)

# मानवरूपीवाद (Anthropomorphism)

## १. हिन्दू मतः

मानवीय इच्छा, आकाँक्षा बुझ्न ईश्वरलाई मानवीय रूप लिनु पर्ने आवश्यकताः

प्राय अरू धर्महरू (इस्लाम बाहेक) तथा केही व्यक्तिहरूले Anthropomorphism को दर्शन शास्त्रमा विश्वास गर्दछन्, त्यो हो ईश्वरले मानव शरीर धारण गर्ने विश्वास । यस दर्शन शास्त्रानुसार ईश्वर यति शुद्ध, निर्मल र पवित्र छन् कि उनी मानवका पीडा, संघर्ष, दोष, कठिनाई आदि भावनाहरू प्रति अनभिज्ञ हुन्छन् । मानिसहरूका दुःख र कष्ट आदिको अनुभवबारे ईश्वरलाई कुनै ज्ञान हुँदैन । अतः मानिसहरूका निम्ति उचित नियम, कानूनको स्थापनाको लागि उनी मानव रूप लिई यस धर्तीमा आउने गर्दछन् ।

## २. इस्लामको मत :

मानवीय इच्छा, आकाँक्षा बुझ्न ईश्वरलाई मानवीय रूप लिनु पर्ने आवश्यकता नरहेको : यसलाई स्पष्टसँग बुझ्नको लागि एक उदाहरण प्रस्तुत गरिएको छ ।

मानी लिऔं मेरो एक कारखाना छ जहाँबाट म रेडियोहरू उत्पादन गर्दछु । अर्थात म रेडियोको रचनाकार हुँ । अब एक प्रश्न आउन सक्छ, रेडियोको हानी र नोक्सानीहरू तथा राम्रो र नराम्रो पक्षहरू थाहा पाउन के म स्वयंले पनि रेडियोको रूप धारण गर्नुपर्ने आवश्यक छ त ? यस्तो वस्तुको निर्माण गरे पश्चात म एक निर्देशन पुस्तिका पनि तयार गर्दछु । जसमा यसका कार्यप्रणाली, यसका पार्ट-पूर्जाहरूबारे सही जानकारी तथा यसलाई सञ्चालन गर्ने विधि आदि कुराहरूको वर्णन गरिएको हुन्छ । यस वस्तुलाई के बाट जोगाउनु पर्छ तथा गर्न हुने र गर्न नहुने कार्यहरू निर्देशन पुस्तिकामा उल्लेख गरिएका हुन्छन् । यस्तो निर्देशन पुस्तिका केवल मैले मात्र सही रूपले तयार गर्न सक्दछु किनकी म नै यस वस्तुको (रेडियोको) असली रचनाकार तथा निर्माणकर्ता हुँ ।

यसैगरी सम्पूर्ण मानवजातिका निम्ति सृष्टिकर्ताका तर्फबाट एक निर्देशन पुस्तिका तयार गरिएको छ, त्यो हो पवित्र ग्रन्थ कुरआन । सृष्टिकर्ता अल्लाहलाई

मानिसका असल र खराब पक्षहरू थाहा पाउन मानवकै रूप धारण गरी हामी माझ आउनु पर्ने आवश्यकता छैन। 'कुरआन' ईश्वरका तर्फबाट विश्वकै सम्पूर्ण मानव जातिको निम्ति तयार पारिएको अन्तिम तथा निर्णायक निर्देशन पुस्तिका हो ।

'कुरआन' मा मानिसहरूका लागि गर्न हुने (वैध) र गर्न नहुने (अवैध) कार्यहरू आदिको विवरण दिइएको छ ।

अल्लाह स्वयंलाई यस धर्तीमा आइ निर्देशन पुस्तिका तयार गर्नुपर्ने आवश्यकता छैन। उनले मानिसहरूमध्येबाट नै व्यक्तिको चयन गरी आफ्ना सन्देशहरू पुऱ्याउने गर्दछन्। यस्ता व्यक्तिलाई आकाशवाणी मार्फत ईश्वर आफ्ना सूचना, सन्देशहरू प्रदान गर्दछन्। यी व्यक्तिहरूलाई नै ईश्वरका सन्देष्टा तथा रसूल भनिन्छ ।

# इस्लामका आस्थाका स्तम्भहरू र आधारशिलाहरू

एकेश्वरवाद, ईशदूतत्व र परलोकका धारणाहरू इस्लामका तीन आधारस्तम्भहरू हुन्, जसमाथि इस्लामका सम्पूर्ण आस्था र सत्कर्महरू आधारित रहेका छन् ।

आस्थाका अवधारणाहरू: आस्थाका अवधारणाहरू ६ वटा छन् जुन यसप्रकार रहेका छन् ।

१) **एक ईश्वरप्रति आस्था:** एक व्यक्ति मुसलमान हुनको लागि एकेश्वरमा आस्था राख्न आवश्यक छ, जसले गर्दा ती व्यक्तिले एक ईश्वर बाहेक अन्य कुनै पनि शक्ति वा स्वरूपका सामु आफ्नो शिर ननिहुराओस्, अन्य शक्ति वा स्वरुप जस्तै प्रकृति, प्राणी, नक्षत्र, मूर्ति आदिका सामु नतमस्तक भइ निहुरिनु भनेको एक ईश्वरको स्थानमा अरू कसैलाई समावेश गर्नु वा साझा ठहऱ्याउनु हो, जुन कार्य मानिसका निम्ति एक अक्षम्य अपराध हो भनी ईश्वर (अल्लाह) अन्तिम सत्यग्रन्थ कुरआन मार्फत भन्दछन् ।

   एकेश्वरवादको धारणा हिन्दू धर्ममा पनि रहेको छ । सो कुराको पुष्टि हिन्दू धर्मका ग्रन्थहरू वेद तथा उपनिषद्ले गर्दछन् ।

२) **ईशदूतहरू प्रति आस्था:** मानवमध्येबाटै कुनै विशिष्ट व्यक्तिको चयन गरी ईश्वर आफ्ना सन्देशहरू मानवसमक्ष पुऱ्याउने गर्दछन् । हदीस अनुसार लगभग १,२४,००० ईशदूतहरू पठाइएको कुराको ज्ञान हुन्छ । जसमध्ये २५ वटाका नाम सहीतको वर्णन कुरआनमा पाइन्छ । तीमध्ये आदम, नूह, इब्राहीम (अ.), इस्माईल (अ.), इस्हाक (अ.), मूसा (अ.), ईसा (अ.), मुहम्मद (स.) आदिहरू रहेका छन् ।

   हिन्दू धर्ममा ईशदूतत्वको धारणा झैं अवतारवादको धारणा रहेको पाइन्छ । जस अनुसार मानवताको रक्षाका लागि ईश्वर स्वयं विभिन्न अवतार लिइ हरेक युगमा धर्तीमा आउने गर्दछन् भनी भागवत गीतामा उल्लेख गरिएको पाइन्छ ।

३) **ईश्वरीय ग्रन्थहरू प्रति आस्था:** कुरआनमा ४ वटा ग्रन्थहरूको नाम वर्णन गरिएको छ । जुन ईश्वरले आफ्ना दूतहरूमाथि विभिन्न युगमा अवतरित गरे । ती हुन्: जबूर, तौरात, इन्जील र कुरआन । जुन क्रमश: दाउद (अ.), मूसा (अ.), ईसा (अ.) र मुहम्मद (स.) माथि अवतरित गरे ।

यी मध्ये मुहम्मद (स.) सबै सन्देष्टाहरूको समापक हुनुहुन्छ। अर्थात् उहाँ अन्तिम सन्देष्टा हुनुहुन्छ र उहाँमाथि अवतरित ग्रन्थ कुरआन एक निर्णायक ईशग्रन्थ हो ।

हिन्दू धर्ममा वेद तथा उपनिषद्लाई ईश्वरीय ग्रन्थ भनी विश्वास गरेको पाइन्छ। जुन एकेश्वरवाद र परलोकको आस्थामाथि आधारित रहेको छ।

४) **फरिश्ताहरू प्रति आस्थाः** फरिश्ताहरू (दूत) पनि अल्लाहका सृष्टि हुन् । यिनीहरू ओजस्वी, असाध्यै राम्रा तथा दिव्य प्रकासबाट बनेका हुन्छन् । यिनीहरू ईश्वरका आज्ञापालक तथा निस्पाप हुन्छन् । केही फरिश्ताहरूको नाम जिब्रईल, मिकाईल, इज्राईल, इस्राफील आदि हो ।

फरिश्ताहरू झैं देवदूतहरू प्रतिको विश्वास हिन्दू धर्मावलम्बीहरूमा पनि रहेको पाइन्छ ।

५) क) **आखिरत माथि आस्थाः** यस कुरामा आस्था राख्नु कि प्रलय पश्चात अल्लाहले सबैलाई पुनर्जीवित पार्नेछन् र सो दिन हरेक व्यक्तिले यस धर्तिमा गरेको आफ्नो कर्म अनुसारको फल पाउनेछन् ।

ख) **पुनर्जीवन र परलोकप्रति आस्थाः** एक मुसलमानले परलोकको जीवनप्रति आस्था राख्न जरूरी छ किनकी अल्लाह कुरआन मार्फत भन्दछन्, "उनी जसले मृत्यु र जीवनको सृष्टि गरे जसले गर्दा उनले तिम्रो परीक्षा लिउन् कि तिमी मध्ये कसले असल कार्य गर्नेछन् र उनी (ईश्वर) प्रभुत्वशाली र क्षमाशिल छन्" । यसबाट यो स्पष्ट हुन्छ कि पारलौकिक जीवनको निम्ति यो जीवन केवल एक परीक्षा हो । यस सत्यलाई हरेक मुसलमानले आत्मासात गर्नुपर्दछ ।

पुनर्जीवन तथा परलोक प्रतिको धारणा हिन्दू धर्ममा पनि रहेको छ ।

६) **भाग्य (तकदीर) प्रति आस्थाः** भाग्यप्रति हरेक मुसलमानले आस्था अनि विश्वास राख्नु पर्छ किनभने एउटा मानिसले आफ्नो जीवनमा के गर्छ, के खान्छ, कति उमेर पाउँछ। यी सबै कुरालाई ईश्वरले पहिलेदेखि आफ्नो ज्ञानको आधारमा लेखिदिएका छन् । जसलाई हामी भाग्य भन्दछौं र मानिसले जे गर्नेछ वा उसको जीवनमा जे हुनेवाला छ सो को जानकारी अल्लाहलाई हुन्छ र उनले त्यसलाई लेखेका हुन्छन् । एक मुसलमानले भाग्य प्रति आस्था राख्नुको अर्थ हुन्छ आफूले जन्मदै पाएका गुण, अवगुण वा जीवनका

उकाली-ओराली जे जस्तोमा पनि धैर्यधारण गरी ईश्वरकै आदेश बमोजिम जीवन ब्यतित गर्नु ।

हिन्दू धर्ममा पनि भाग्य प्रतिको धारणा रहेको पाइन्छ । यसबारे विस्तृत छलफल गर्नेछु ।

यी हुन् एक मुसलमानले आत्मासात गर्नुपर्ने ६ वटा आस्थाका अवधारणाहरू इस्लामले सदैव इलम र अमल अर्थात ज्ञान र कर्म दुवैलाई प्राथमिकता दिएको छ । ज्ञान यदि ज्ञानमा नै सीमित रहेको खण्डमा त्यो अधुरो अनि अपूर्ण हुन्छ । यसर्थ यी आस्थाका स्तम्भहरूमा आधारित भइ जुन मुसलमानले सत्कर्म गर्दछ त्यो नै वास्तवमा मृत्युलोक र परलोक दुवैमा सफलता प्राप्त गर्ने व्यक्ति बन्दछ ।

सांसारिक जीवनको प्रत्येक समय र प्रत्येक विषयमा ईश्वरसित डराउनु, उनको प्रसन्नतालाई ध्यानमा राख्नु, उनको कानुनको पालना गर्नु, उनको अवज्ञाबाट प्राप्त हुने प्रत्येक लाभलाई पन्छाउनु र प्रत्येक क्षणिक सांसारिक कष्टलाई स्विकार्नु जो उनको आज्ञापालनमा हुन्छ वा हुने डर हुन्छ । यहि हो अल्लाहको सहि उपासना । यसरी जीवन उपासना नै उपासनाले भरीपूर्ण हुन्छ । यहाँसम्म कि जीवनमा खानु, पिउनु, हिड्नु, डुल्नु, सुत्नु, उठ्नु, कुराकानी गर्नु इत्यादि कार्यहरू समेत उपासनामा समाविष्ट छन् । यही उपासनाको वास्तविक अभिप्राय हो । इस्लामको वास्तविक उद्देश्य नै मुसलमानहरूलाई यस्तै उपासक र सेवक बनाउनु हो । ईस्लाममा केही यस्ता उपासनाहरू अनिवार्य गरिएका छन् । जसबाट मानिसलाई यस महान उपासनाका निम्ति तयार गरिन्छ अर्थात यस्ता तालिम विशेष उपासनाहरू यस ठूलो उपासनाको निम्ति तालिम सम्बन्धि पाठ्यक्रम हुन् । जसले यो तालीम राम्ररी ग्रहण गर्छ, उसले यो ठूलो र वास्तविक उपासनालाई उति नै राम्ररी कार्यरुपमा परिणत गर्न सक्छ । यसकारण यी विशेष उपासनाहरूलाई मुख्य कर्तव्य अथवा अनिवार्य कार्य ठहऱ्याइएको छ । यसैले यिनीहरूलाई धर्मका अंग वा स्तम्भहरू भनिन्छ ।

## इस्लाम धर्मका पाँच आधारशिलाहरू

१) **शहादत:** इस्लामका पाँच आधारशिलाहरूमध्येको प्रथम तथा अत्यन्तै महत्वपूर्ण स्तम्भ शहादत (आत्मा-साक्षी) को रहेको छ । किनभने यसको

शुरूवात एक यस्तो सत्य कथनबाट हुन्छ जुन अल्लाहले मानव जाति समक्ष प्रकट गरे : "ला इलाह इल्लल्लाह, मुहम्मदुर्रसुलुल्लाह" अर्थात (सर्व-शक्तिमान) अल्लाह बाहेक कुनै पनि (शक्ति तथा स्वरूप) उपासना तथा भक्तिको योग्य छैन तथा मुहम्मद ईश्वरका भक्त एवं सन्देष्टा हुन्' । यस माथि आस्था राख्ने बित्तिकै एक व्यक्ति मुसलमान बन्दछ ।

२) **नमाजः** एक मुसलमानको पहिलो कर्तव्य नमाज हो । नमाज अर्थात् एक अल्लाहको प्रार्थना । यसको साथै नमाज एक व्यक्तिको नैतिक सुधार र अनुशासनको अभ्यास गराउने एक शारीरिक र आध्यात्मिक योग अर्थात् मेल हो । अनिवार्य नमाज (फर्ज) दिनको पाँच पटक हरेक बालिग महिला तथा पुरुष मुसलमानहरूलाई अनिवार्य गरिएको छ ।

हिन्दू धर्ममा पनि मूर्ति पूजालाई निषेधित गरिएको छ । अगाडि उल्लेख गरिएका वेदका श्लोकहरूले यस कुराको पुष्टि गर्दछ । केही पण्डितहरूले मूर्तिको प्रयोग केवल मन एकाग्रताका निम्ति मात्र प्रयोग गर्ने बताएका छन् ।

३) **रोजाः** रोजा अर्थात् व्रत हरेक मुसलमानहरूको अर्को अनिवार्य कर्तव्य हो । यो रमजान महिनामा हरेक दिन सूर्योदयभन्दा अगाबै शुरू भै सूर्यास्तपछि पूरा हुन्छ । व्रतको समयमा अन्न, जल, यौन सम्पर्क आदिलाई त्याग्न सकेको खण्डमा मात्र व्रत पूर्ण हुने गर्दछ । व्रतालुले आफूलाई रिस, झगडा, अनावश्यक वाद-विवाद आदिबाट टाढा राख्नु पर्दछ, अन्यथा व्रत अर्थहीन हुनेछ । रोजाले व्यक्तिलाई आत्मसंयमको बानी बसाल्दछ । यदि तपाईं आफ्नो भोक र प्यासलाई नियन्त्रणमा राख्न सक्नु हुन्छ भने अन्य कुराहरूको चाहनाको नियन्त्रण गर्न सक्ने इच्छा-शक्तिको विकास तपाईं स्वयंले गर्न सक्नु हुन्छ ।

इस्लाम धर्ममा झैं हिन्दू धर्ममा पनि व्रतको अवधारणा रहेको छ । तर व्रतको तरिका र अनिवार्यतामा भिन्नता छ ।

४) **जकातः** वर्षको एक पटक अनिवार्य रूपले गर्नुपर्ने दान धनको त्याग नै जकात हो । जकात प्रायः सबै मुसलमानहरूका लागि अनिवार्य गरिएको छ । जम्मा पूँजी, सुन, चाँदी, आदि जस्ता मूल्यवान वस्तुबाट र व्यापार-व्यवसाय, कृषि उत्पादन आदिबाट जकात दिन आवश्यक हुन्छ । यसबाट उठेको रकम गरीब, ऋणमा डुबेका आफन्तलाई, संकटमा परेका यात्रु

आदिलाई दिइन्छ। यसरी दान दिने प्रवृतिले केवल गरीबहरूलाई मात्र मद्दत पुग्ने होइन बरू दाताहरूमा पनि दान दिनु पर्ने भावना उत्पन्न गराउन मद्दत पुग्दछ। यदि विश्वका हरेक व्यक्तिले निश्चित गरिए अनुरूपकै रकम जकात दिने हो भने संसारका कुनै पनि ब्यक्तिको भोकमरीले गर्दा मृत्यु हुने छैन। यस्तो प्रवृतिले समाजमा बिद्यमान धनी र गरीब बीचको खाडललाई कम गर्ने छ।

हिन्दू धर्ममा दान-दक्षिणाको परम्परा रहेको छ। दान-दक्षिणाहरूबारे हिन्दू धर्मग्रन्थहरूमा पनि उल्लेख गरिएको पाइन्छ। हिन्दू संस्कृति अनुसार-यज्ञ, तप र दान यी तिनै कर्महरूले युक्त यज्ञ कार्यको सम्पादन गर्दा प्रदान गरिने दानलाई दक्षिणा भनिन्छ। यसको बिना यज्ञकर्म पूर्ण हुँदैन।

५) **हज:** आफ्नो जीवन-कालमा कम्तिमा एक पल्ट हज (तीर्थ) गर्नु शारीरिक तथा आर्थिक रूपले सक्षम मुसलमानका लागि अनिवार्य गरिएको छ। विश्वका हरेक कुनाबाट हरेक वर्ष भण्डै २.५ मिलियन भक्तजनहरू एकै थलोमा (काबामा) भेला हुने गर्दछन्।

हिन्दू धर्ममा तीर्थ गर्ने परम्परा रहेको छ। 'तीर्थ' को परिभाषा दिदै मधुसूदन सुवेदी (अनन्त धारा, वर्ष २, अङ्क ६) मा लेख्छन- "मुक्त भएका वा मुक्त हुन चाहने व्यक्ति जहाँ बस्दछन् त्यो स्थानलाई तीर्थ भन्दछन्"। उनी अझ अगाडि लेख्छन् "तीर्थ भनेको वास्तविक धाम हो"।

# धर्मग्रन्थहरूमा मृत्यूपछिको जीवन

## • वेदमा मृत्युपछिको जीवन

मृत्युपछिको जीवनको सन्दर्भमा ऋग्वेद, दसौं मण्डल, सूक्त १६, श्लोक ४ मा उल्लेख गरिएको छ । "यस मृत पुरुषमा जुन अविनाशी ईश्वरीय अंश छ, त्यसलाई तिमी आफ्ना तेजले तपाएर प्रखर गराऊ । ज्वालाले त्यसलाई बलियो बनाऊ । 'जातवेद' आफ्ना कल्याणकारी विभूतिले त्यसलाई पुण्यात्माको लोकमा लगिदेऊ" संस्कृत शब्द 'सुकृतामु लोकम्' को अर्थ 'पुण्यआत्माको लोकमा' हो, जसको अर्थ मृत्युपछिको जीवन भन्ने बुझिन्छ ।

ऋग्वेद, दसौं मण्डल, सूक्त १६, श्लोक ५ ले भन्छ,

"मृत पुरुष तिम्रा लागि स्वधायुक्त आहुतिको रूप ग्रहण गर्दछ । उसलाई तिमी फेरी पितृका लागि सिर्जना गर । जातवेद ! यसका आयुको जुन भाग बाँकी छ, त्यो प्राणसम्पन्न होस् र पुनः बलियो शरीरधारी होओस्" ।

यस श्लोकले दोश्रो जीवन अथवा मृत्युपछिको जीवनबारे प्रष्ट गर्दछ ।

## • वेदहरूमा स्वर्गको वर्णन

अथर्ववेद, चौथो मण्डल, सूक्त ३४, श्लोक ६ अनुसार

"प्रकाशको ध्वनि भएको, मधु अर्थात ज्ञानको रक्षा गर्ने, सुरा अर्थात ऐश्वर्य वा तत्व मथनलाई सेवन गर्ने, भोजन साधनले सेचन वा बृद्धि साधनले अनि धारण पोषण सामर्थ्यले परिपूर्ण ।"

अथर्ववेद, चौथो, मण्डल, सूक्त ३४, श्लोक २ अनुसार

"नगिराउन योग्य, शुद्ध आचरणबाट शुद्ध गरिएको शुद्ध स्वभाव, प्रकाशमान महात्मा व्यक्तिहरू नै ज्योति स्वरूप लोकलाई पाउँछन् । प्राणिहरूलाई चिनेका परमेश्वरले यिनका गति वा सामर्थ्यलाई जलाउँदैन । त्यसैले यिनी (महात्माहरू) हरूका सृष्टिको हितकर्म राम्रो प्रकारले पाउन योग्य सुखदायक लोकमा धेरै छन् ।"

अथर्ववेद, दोश्रो मण्डल, सूक्त ३४, श्लोक ५ अनुसार

"ठूलो ज्ञान भएका व्यक्तिले प्रथम स्थानमा वर्तमान महात्मा पुरुष सबैको

हितका लागि सबैतिर जाने आफ्नो प्राणलाई प्रत्यक्ष ग्रहण गर । (हे मनुष्य) ज्ञान प्रकाश वा व्यवहारलाई प्राप्त गर, सबैका अगाडि तिमी प्रतिष्ठित होऔं, देवताहरू जान योग्य मार्गहरूबाट स्वर्ग (महा आनन्द) मा तिमी पुग'' ।

अथर्ववेद, छैठौं मण्डल, सूक्त १२२, श्लोक ३ अनुसार

''हे (दम्पति) स्त्री-पुरुषहरू (सत्कर्मलाई) निरन्तर आरम्भ गर, मिलेर आरम्भ गरी राख, श्रद्धालु व्यक्तिहरू यस (स्वर्ग) लोकलाई निरन्तर भोग्दछन् । आगोमा पाकेका (अन्न) तिम्रो लागि उपस्थित छ, त्यसको रक्षाको लागि तिमी दुवै परस्पर आश्रय लिऊ'' ।

ऋग्वेद, दशौं मण्डल, सूक्त, श्लोक १८ अनुसार

''हे इडाका पुत्र ! तिमी मृत्युमाथि विजय प्राप्त गर्न सक्छौ भनेर यी सबै देवताले तिम्रै विषयमा कुरा गरिरहेका छन् । जीवनको काम पूजा समान मान र स्वर्गमा गएर सुख तथा आनन्द प्राप्त गर" ।

## • वेदहरूमा नर्कको वर्णन

वेदहरूमा नर्क बारेको वर्णन गरिएको पाइन्छ । 'नर्क' लाई संस्कृतमा 'नर्कस्थानम्' भनिएको छ । ऋग्वेद, चौथो मण्डल, सूक्त ५, श्लोक ४ मा भनिएको छ,

''मित्रदेव र वरूणदेवका प्रियपात्रको विनाश गर्ने व्यक्तिलाई असल धनले सम्पन्न र तिखा दाँत भएका अग्निदेव आफ्नै तेजले भस्म बनाइदिन्छन्''

''दाजुभाइबिनाकी तर पतिसँग झगडा गर्ने स्त्रीले जस्तो दुःख पाउँछन् उसै किसिमले सत्यविहीन यज्ञको अनुष्ठान नगर्ने र अग्निसित रिसाउने असत्यवादी पापी व्यक्तिले नरकको जस्तै अवस्था सिर्जना गर्दछन्''

## • "पुनर्जन्म" मृत्यूपछिको जीवन हो

हिन्दू मत अनुसार एक व्यक्तिले मृत्यु प्राप्त गरेपछि फेरी जन्म लिनेछ । यस चक्रलाई 'पुनर्जन्म' भनिन्छ । संस्कृतमा 'पुन' भन्नाले 'फेरी' वा 'अर्को' पटक र 'जन्म' भन्नाले 'जीवन' भन्ने बुझिन्छ । अतः पुनर्जन्म भन्नाले बारम्बार जन्म लिने नभई अर्को 'एक' जीवन वा मृत्युपछिको जीवन भन्ने बुझिन्छ । 'पुनर्जन्म' कै सन्दर्भमा भन्नुपर्दा वेद बाहेक अन्य हिन्दू ग्रन्थहरू 'गीता र उपनिषद्मा' मृत्युपछिको

जीवनलाई मनन् गरी पढ्नु भयो भने पुनर्जन्म भनेको बारम्बार जन्म लिनु नभई अर्को एक जन्म हो भन्ने धारणा व्यक्त भएको पाउनु हुनेछ । बारम्बार जन्म लिइने धारणाको शुरूवात बैदिक कालपछि थरीथरीका मानिसहरूको जन्म (जस्तै कोही स्वस्थ्य, कोही अपाङ्ग, कोही सम्पन्न, कोही विपन्न आदि) तथा समाजका विभिन्न परिस्थितिहरूमा व्यक्ति तथा समूह विशेषमा रहेको उदासिनतालाई तर्क संगत रूपले व्याख्या गरिने क्रममा भएको हो । जब कि सृष्टिकर्ताले कसैप्रति पनि अन्याय गर्दैनन् । यसको तर्कपूर्ण जवाफ इस्लामसँग रहेको छ, जुन हामी पछि छलफल गर्ने छौं, इन्साअल्लाह ।

## • हिन्दू धर्ममा पुर्नजन्मको सिद्धान्त

हिन्दूहरूमा पुनर्जन्मको सिद्धान्त अनुसार मानिसहरूको जन्मावस्थाको विभेद जस्तै कोही स्वस्थ्य, कोही अपाङ्ग वा अन्धो आदि भइ जन्मनु पूर्व जन्मको कर्मको फल हो भन्ने मान्यता रहेको छ । यसैगरी सबै कर्महरूको फल यस जीवनमा मात्र नभइ अर्को जीवनमा पनि प्राप्त गरिन्छ । सो को वर्णन भागवद गीता, अध्याय २, श्लोक २२ मा यसरी गरिएको छ,

"जसरी मानिसले पुराना कपडाहरू त्यागेर नयाँ कपडा धारण गर्छ त्यसै गरी आत्माले पनि पुराना र काम नलाग्ने शरीरलाई त्यागेर नयाँ भौतिक शरीर धारण गर्छ" ।

## • कर्म

कर्म भन्नाले सक्रियताका साथ कार्य गर्नु भन्ने बुझिन्छ र यस्ता कार्यहरू शरीरले मात्र नभइ मस्तिष्कद्वारा पनि भएको हुनुपर्दछ । वास्तवमा कर्म भनेको क्रिया र प्रतिक्रिया अथवा कारण र परिणामको नियम हो । यसलाई अझ स्पष्टसँग बुझ्नको निमित्त यहाँ एक भनाइ दिइएको छ,

"जस्तो कर्म उस्तै फल" अर्थात जसले जस्तो कर्म गर्दछ, उस्तै फल प्राप्त गर्दछ । उदाहरणको लागि एक किसानले गहुँको बिउ छरेर चामलको आशा गर्नु हुँदैन । यसैगरी हरेक राम्रा विचार तथा कर्मबाट उस्तै फल प्राप्त हुन्छ । जसले अर्को जीवनलाई पनि प्रभाव पार्दछ र हरेक खराब विचार तथा दुष्कर्महरूले यस जीवन अनि अर्को जीवनमा नोक्सानी र हानी सिवाय केही प्राप्त हुँदैन ।

- **धर्म- सत्कर्म**

धर्मले सही वा (सत्कर्म) धार्मिक कर्तव्यहरूको जानकारी बोध गराउँदछ। यसले व्यक्ति, परिवार, वर्ग वा जाति र ब्रह्माण्ड आदिको बारे सही ज्ञान दिन्छ। राम्रो कर्म गर्न र सो अनुसार कै फल प्राप्त गर्न धर्मले सिकाए अनुरूपकै जीवन जीउनु पर्दछ नत्र भने यसको परिणाम नराम्रो हुनेछ। धर्मले वर्तमान जीवनको अतिरिक्त भविष्यलाई पनि प्रभाव पार्दछ।

- **मोक्ष - पुनर्जन्मको क्रमबाट मुक्ति प्राप्त गर्नु**

मोक्षको अर्थ पुनर्जन्मको क्रम (सिलसिला) अर्थात 'समसार' बाट मुक्ति प्राप्त गर्नु हो। हिन्दू मत अनुसार हरेक व्यक्तिको पुनर्जन्मको क्रम एक दिन समाप्त हुन्छ र उसले फेरी जन्म लिनु पर्दैन। यो तब हुन्छ जब उसको जीवन प्रतिको उद्देश्य समाप्त हुन्छ, त्यो हो राम्रो र नराम्रो सबै कर्मबाट मुक्त हुनु।

वेदहरूमा पुनर्जन्मको सिद्धान्त अर्थात आत्माको पुनर्जन्म बारेको धारणा कही वर्णन गरिएको छैन।

- **मृत्युपछिको जीवनः- पारलौकिक जीवन**

इस्लामको मत : मृत्युपछिको जीवन बारे पवित्र कुरआन, सूरह बकरह, अध्याय २, श्लोक २८ मा यसरी वर्णन गरिएको छ- "तिमी अल्लाहप्रति कसरी अविश्वासी बन्छौं जब कि तिमी निर्जीव थियौं अनि उनले तिमीलाई जीवित पारे ! फेरी उनले तिमीलाई मृत्यू दिने छन्, फेरी उनैले तिमीलाई जीवित गर्नेछन्, फेरी उनी तर्फ नै तिमीहरू फर्केर जानुछ।"

इस्लामको मत अनुसार एक व्यक्तिको यस लोकमा केवल एक जन्म मात्र हुन्छ, मृत्युपश्चात 'फैसलाको दिन' मात्र पुनर्जीवित गरिनेछ। तर सो दिन हरेक व्यक्तिले आफ्नो कर्म अनुसारको फल पाउनेछन्। असल कर्म गर्नेहरू स्वर्ग (जन्नत) जानेछन् र खराब कर्म गर्नेहरू नर्क (जहन्नम) जानेछन्।

- **फैसलाको दिन (राम्रा नराम्रा) हरेक कार्यहरूको पूर्ण रूपले बदला चुकाइनेछ**

पवित्र कुरआनको सूरह आले-इमरान, अध्याय ३, श्लोक १८५ मा भनिएको छ- "हरेक जीवले मृत्युको स्वाद चाख्नुछ र तिमीलाई तिम्रो भरपुर बदला 'फैसला' को दिन चुकाइनेछ। अतः जसलाई आगो (जहन्नम) बाट हटाइयो र स्वर्ग

(जन्नत) मा प्रवेश गराइयो ऊ सफल भयो। सांसारिक जीवन त केवल एक धोखाको सामाग्री हो"

- **स्वर्ग (जन्नत):**

'जन्नत' अर्थात स्वर्ग एक चिरस्थायी सुख तथा आनन्दमयी स्थान हो, अरबी भाषामा यसको शाब्दिक अर्थ बगैंचा हुन्छ। पवित्र कुरआनमा यस बगैंचाबारे बिस्तृत वर्णन गरिएको पाइन्छ। जस्तै- यस्तो बगैंचा जसको मुनि नदीहरू बगेका हुनेछन्। ती नदीहरू शुद्ध मह तथा दूधले युक्त हुनेछन् र कहिल्यै परिवर्तन नहुने सबै किसिमका मिठो स्वादका फलहरू हुनेछन्। थकानको अनुभव गरिने छैन। त्यहाँ कुनै पनि किसिमका पाप तथा दुष्कर्महरू हुनेछैन, हुनेछ त शान्ति केवल शान्ति।

- **नर्क (जहन्नम) :-**

नर्क यस्तो ठाउँ हो जहाँ मानिसहरूले विभिन्न किसिमका यातना, पीडा आदि भोग्नु पर्नेछ, जसलाई 'आगो' भनेर कुरआनमा वर्णन गरेको पाइन्छ। नर्कको 'आगो' को इन्धन मानिसहरू र ढुङ्गाहरू दुबै हुनेछन्।

## भाग्य प्रतिको धारणा

हिन्दू धर्ममा दुई मानिसहरूको जन्मको भिन्नता जस्तै एक बच्चा जन्मदै पूर्ण स्वस्थ्य तथा सुन्दर र अर्को बच्चा जन्मदै अपाङ्ग, त्यस्तै एक बच्चाको जन्म सम्पन्न परिवारमा हुन्छ र अर्कोको विपन्न परिवारमा हुन्छ भने यस्तो विभेदलाई अघिल्लो जन्ममा गरेको कर्मको फल हो भन्ने धारणा रहेको छ। तर यसलाई सही प्रमाणित गर्ने खालका कुनै पनि वैज्ञानिक आधार वा तर्कपूर्ण प्रमाण भने छैन। मानिसहरूको जन्मका यी विभेदहरू बारे इस्लामको धारणा यस्तो रहेको छ।

इस्लाममा भाग्य प्रतिको धारणा नै कद्र हो। मानवीय जीवनमा केही पक्षहरू (घटना) यस्ता हुन्छन् जुन सृष्टिकर्ता अल्लाहबाट पहिले नै निश्चित गरिएका हुन्छन्, जस्तै- कहिले र कहाँ कुन मानिसको जन्म हुन्छ। कस्तो वातावरण र परिस्थितिमा उसको (मानिसको) जन्म हुन्छ, आयु कति हुनेछ अनि मृत्यु कहाँ, कहिले, कुन अवस्थामा हुनेछ ? के कस्ता कार्य गर्ने छ? आदि इत्यादि।

## • इस्लामको धारणानुसार यो जीवन एक परीक्षा हो -

पवित्र ग्रन्थ कुरआनमा यस्ता केही श्लोकहरू रहेका छन् जसमा सृष्टिकर्ता अल्लाहले बिभिन्न तरीकाबाट हाम्रो परीक्षा लिने कुराको पुष्टि गर्दछ । जस्तै सूरह बकरह् श्लोक २१४ मा भनिएको छ, "के तिमीहरू स्वर्गमा प्रवेश गरौला भन्ने धारणा राख्दछौ, जबकि तिमीहरू समक्ष ती तिमीहरूभन्दा पहिले गुज्रेका व्यक्तिहरूको अवस्था आएको छैन ? तिनीहरूले दुःख र कष्ट भोगे तथा तिनीहरूलाई भयभित पारी कंपाइयो, अन्ततः सन्देशवाहक तथा उनका अनुयायी आस्थावानहरूले भनेः "अल्लाहको सहयोग कहिले प्राप्त हुन्छ ? "सून, अल्लाहको सहयोग निस्सन्देह अति निकट छ" । (सूरह मुल्क, अध्याय ६७, श्लोक २)

"उनैले मृत्यु र जीवनको सृष्टि गरे जसले गर्दा उनले तिम्रो परीक्षा लिउन् कि तिमी मध्ये कसले असल कार्य गर्नेछ र उनी (ईश्वर) प्रभुत्वशाली र क्षमाशील छन्" ।

सूरह अन्कबुत, अध्याय २९, श्लोक २ मा भनिएको छ,

"के मानिसहरूले ठानेका छन् कि उनीहरूले इमान ल्याए भन्दैमा तिनीहरूलाई जाँच्दै नजाँचिकन छाडिदिइनेछ ?"

सूरह अंबिया, अध्याय २१, श्लोक ३५ मा भनिएको छ,

"हरेक प्राणीले मृत्युको स्वाद चाख्नेछ तथा नराम्रो र राम्रो अवस्थाको परीक्षाद्वारा हामी तिमीहरूलाई जाँच्नेछौं तथा हामी तर्फ नै तिमीहरूलाई फर्काएर ल्याइनेछ" ।

त्यस्तै सूरह बकरह्, अध्याय २, श्लोक १५५ मा भनिएको छ,

"तथा निश्चय नै तिमीहरूलाई हामी केही डर, भोक तथा ज्यान-माल र फलको कमीद्वारा जाँच्नेछौं । अतः तिमी धैर्यधारीहरूलाई शुभ-सन्देश सुनाऊ" ।

फेरी सूरह अन्फाल, अध्याय ८, श्लोक २८ मा भनिएको छ,

"र जानी राख कि तिमीहरूका धन, सम्पत्ति र तिमीहरूका सन्तानहरू केवल परीक्षा स्वरूप हुन् तथा अल्लाहको जुनाफमा एउटा महान प्रतिदान रहेको छ"

यो जीवन जुन यस विश्वमा हामीले बिताइरहेका छौं, पारलौकिक जीवन अर्थात मृत्युपछिको जीवनको निम्ति एक परीक्षा हो । यदि सर्वशक्तिमान ईश्वरको आदेशको अनुसरण गऱ्यौं भने यस परीक्षामा सफल हुनेछौं फलस्वरूप स्वर्ग (जन्नत) प्राप्त हुनेछ । त्यो हो परम सुखद आनन्द र यदि ईश्वरको आदेशको अवहेलना गऱ्यौं भने परीक्षामा असफल भइ नर्क (जहन्नम) मा होमिनु पर्नेछ ।

# धर्म-ग्रन्थहरूमा पर्दाको अपरिहार्यता

हिन्दू धर्मग्रन्थहरूमा नारी र पर्दाको सम्बन्धमा भनिएका कुराहरू वेद, पुराण, महाभारत, रामायण आदि ग्रन्थहरूमा वर्णन गरिएका छन् । जसमध्ये वेद तथा पुराणका केही अंशहरूको वर्णन गर्नु सान्दर्भिक ठान्दछु ।

"ब्रम्हले तिमीलाई नारी बनाएका छन्, यसकारण आफ्नो दृष्टिलाई तल राख, आफ्ना खुट्टाहरूलाई छोपेर राख र यस्तो लुगा लगाउ जसबाट तिम्रो शरीरलाई कसैले देख्न नसकोस् ।" (ऋग्वेद ८-३३-१९)

कलियुगको लक्षणको बारेमा पुराणमा भनिएको छ,

"अन्तिम युगमा नारीहरूमा विकृति उत्पन्न हुनेछ । पर्दा नगरीकनै सबैका अगाडि दुबै हातले आफ्नो कपालको श्रृङ्गार गर्ने छन् । कसैको पर्वाह गर्ने छैनन् ।" (ब्रम्ह पुराण, अध्याय-२, श्लोक-३९)

यस्तै हिन्दू धर्म शास्त्रमा व्यभिचारको विषयमा भनिएको छ,

"परस्त्रीसित सम्बन्धित कुरा सुन्नु, उसको बारेमा कुरा गर्नु, उसको साथमा खेल्नु, उसलाई हेर्नु, गोप्य रूपले कुरा गर्नु, उसको बारेमा सोच्नु, उसलाई प्राप्त गर्ने कोसिस गर्नु, उसको शरीरको स्पर्श गर्नु आदि यी आठ प्रकारका व्यभिचारहरू हुन्" ।

उपरोक्त कुराहरूबाट के प्रष्ट हुन्छ भने हिन्दू धर्ममा पनि पर्दा प्रथाको व्यवस्था रहेको छ । यसका केही अंश कुनै-कुनै ठाउँमा केही हिन्दू परिवारका महिलाहरूले अपनाउने गरेको घुम्टो प्रथाको रूपमा आज पनि देख्न सकिन्छ ।

**इस्लाम धर्ममा महिलाहरूका साथै पुरुषहरूले समेत पर्दाका शर्तहरूको पालना गर्नुपर्नेः-**

इस्लाम धर्मले महिलाहरूलाई मात्र पर्दाको आदेश दिदैन बरू नारी र पुरुषका भिन्ना-भिन्नै शारीरिक बनावटका आधारमा दुवैलाई पर्दाको अनिवार्यता दर्शाएको छ । पर्दा भन्ने बित्तिकै केवल लुगा, घुम्टो वा पछ्यौरा मात्र हो भनी सोच्नु गलत हो । लुगाको साथै एक व्यक्तिको दृष्टि, नैतिक आचरण, सोचाइ आदि पनि पर्दा अन्तर्गत नै पर्दछन् । यस सन्दर्भमा कुरआन भन्दछ- "(हे सन्देष्टा !) आस्थावान पुरुषहरूलाई आफ्ना दृष्टिहरूलाई नियन्त्रित राख्न तथा आफ्ना

गुप्ताङ्गहरूको रक्षा गर्न आदेश देऊ। यो उनीहरूको लागि विशुद्ध रीति हो। उनीहरूले गर्ने गरेका कार्यहरूसित अल्लाह परिचित छन्'' । (कुरआन २४:३०)

त्यस्तै महिलाहरूले पर्दा गर्नुपर्ने सम्बन्धमा कुरआनमा भनिएको छ - "र आस्थावान स्त्रीहरूलाई भन कि उनीहरूले आफ्ना दृष्टिहरूलाई नियन्त्रित राखुन, आफ्ना गुप्ताङ्गहरूको रक्षा गरून् र आफ्ना श्रृङ्गार प्रदर्शन नगरून त्यसबाहेक जो स्वयं जाहेर हुन्छ। र, आफ्ना वक्षस्थललाई आफ्ना पछ्यौराले ढाकेर राखुन् अनि आफ्ना श्रृंगार जाहेर नगरून् सिवाय आफ्ना पति, पिता, ससुरा, पुत्रहरू, पतिका पुत्रहरू, (नातेदार) महिलाहरू, दास-दासीहरू, मातहतमा रहेका कामेच्छारहित पुरूषहरू र ती बालकहरूका सामु जो महिलाहरूका गुप्ताङ्गबारे अनभिज्ञ हुन्छन् र आफ्ना खुट्टा बजाउँदै नहिडुन् कि उनीहरूले लगाएका श्रृङ्गारबारे थाहा होस् ....।'' (कुरआन २४:३१)

## पर्दाका ६ अनिवार्य शर्तहरू-

कुरआन र हदिस अनुसार पर्दाका ६ वटा अनिवार्य शर्तहरू छन्। ती हुन-

१) पहिलो अनिवार्य कुरा शरीर हो जसलाई ढाक्न आवश्यक छ। पुरुष र महिलाकालागि यो फरक रहेको छ। पुरुषका लागि नाइटोदेखि घुँडासम्म अनिवार्य रूपले ढाक्नु पर्ने र महिलाकालागि हत्केला र अनुहार बाहेक पूरै शरीर ढाक्न अनिवार्य छ। यदि कसैले खुल्ला भाग (हत्केला र अनुहार) पनि ढाक्न चाहन्छ भने ढाक्न सकिन्छ। बाँकी शर्तहरू पुरुष र महिलाकालागि समान रहेका छन्।

२) लगाइने लुगा खुकुलो हुनु पर्दछ। जसले गर्दा शरीरका अंगका आकार नदेखिउन्।

३) लुगा पारदर्शी अथवा पातलो हुनुहुँदैन जसले गर्दा भित्री लुगा वा अंग देखियोस्।

४) लुगा भड्किला भई विपरित लिङ्गलाई आकर्षित पार्ने हुनु हुँदैन।

५) लुगा विपरित लिङ्गले प्रयोग गर्ने खालको हुनु हुँदैन।

६) लुगा गैर इस्लाम धर्मको प्रतीक हुनु हुँदैन।

पर्दाले व्यक्तिको पहिरनको साथै उसको नैतिक आचरणबारे पनि स्मरण गराउँदछ ।

माथि वर्णन गरिएका ६ वटा शर्तहरू पहिरनकालागि हुन् । अब आचरणका शर्तहरूबारे पनि छोटकरीमा वर्णन गर्न उचित ठान्दछु किनभने पूर्ण पर्दामा पहिरनका साथै आचरण पनि समावेश हुन्छ । यी दुई एक अर्काका परिपूरक हुन् । असल पहिरनले व्यक्तिलाई समाजमा इज्जत प्रदान गर्दछ भने सो इज्जत, मान-सम्मान कायम राख्न आचरण तथा व्यवहारले मद्दत गर्दछ । एक व्यक्तिले आफ्ना दृष्टि अनि सोचलाई नियन्त्रित राख्न तथा बोली-बचन र व्यवहारमा शालिनता अपनाउनु पर्दछ ।

इस्लाममा यौन इच्छा जागृत गराउने खालका लुगा लगाउन नारी र पुरुष दुवैलाई मनाही गरिएको छ । इस्लामले त पुरुषलाई नारी जस्तो र नारीलाई पुरुष जस्तो लुगा लगाउनमा पनि रोक लगाएको छ । किनभने यसबाट पनि मानिसहरूमा भ्रम तथा समलिङ्गकामी भावना उत्पन्न हुन्छ । सन्देश वाहक मुहम्मद (स.) द्वारा भनिएको छ -

"ती महिलाहरू हामीमध्ये होइनन् जसले आफूलाई पुरुष जस्तो देखाउन खोज्दछन् र न त ती पुरुषहरू नै हामीमध्ये हुन् जसले आफूलाई महिला जस्तो देखाउन खोज्दछन् ।" (हदीसको संग्रह-अबुदाउद)

त्यसो त हिन्दू धर्ममा पनि पुरुषलाई नारी जस्तो लुगा लगाउन र नारीलाई शरीर देखिने खालको लुगा लगाउन बर्जित छ । ऋग्वेदमा भनिएको छ,

"यदि पतिले पत्नी जस्तो लुगा लगाउँछ भने उसप्रति जादुजस्तो शक्ति राख्ने (ईश्वर) को प्रकोप हुनेछ ।" (ऋग्वेद १०-८५-२३)

# धर्म ग्रन्थहरूमा मदिरा एवं जुवाको उल्लेख

## इस्लाम धर्ममा मदिरा एवं जुवा निषेधित:

इस्लाम धर्मले जाँड, रक्सी र जुवालाई वर्जित गरेको छ। कुरआनमा अल्लाहद्वारा सन्देश वाहक मुहम्मद (स.) लाई सम्बोधन गर्दै भनिएको छ,

"(हे मुहम्मद !) मानिसहरू तिमीसँग मदिरा र जुवाका बारेमा सोध्दछन् तिमीले भनिदेऊ- यी दुवैमा ठूलो पाप छ तथा मानिसहरूका निम्ति यिनीहरूमा केही फाइदाहरू पनि छन् परन्तु यी दुवैमा रहेको हानी यिनीहरूको फाईदाभन्दा धेरै बढी छ।" (कुरआन - २:२१९)

यसै प्रकार कुरआनको सुरह ५, श्लोक ९०-९१ मा भनिएको छ कि मादक पदार्थ, जुवा, चिठ्ठा इत्यादि शैतानका घृणित कार्यहरू हुन्। मादक पदार्थ र जुवाले मानिसहरूबीच शत्रुता र घृणा भाव उत्पन्न गराउँछन्। यसकारण यी सबै कार्यहरूबाट बच्नु पर्दछ। सन्देशवाहक मुहम्मद (स.) द्वारा भनिएको छ - "प्रत्येक नशालु वस्तु अवैध गरिएको छ।" (हदिस संग्रह-मुस्लीम)

## हिन्दू धर्ममा पनि मदिरा एवं जुवा निषेधित छन् :-

मदिराको सम्बन्धमा ऋग्वेदमा भनिएको छ "मदिरा सेवन गरेपछि त्यसको नशाले मदिरा सेवन गरेका व्यक्तिको मुटुभित्र आफ्नो ठाउँ बनाउनको लागि युद्ध गर्दछ"। (ऋग्वेद ८-२-१२)

अर्थात् मदिरा सेवन पछि मदिराको नसाले मानिसको मुटुलाई नराम्रो काम गर्न प्रेरित गर्दछ। ऋग्वेदको अर्को ठाँउमा भनिएको छ - "हे ईश्वर ! परिश्रम नगर्ने व्यक्तिहरू मदिरा सेवन गरी मस्त हुन्छन् र तिमीलाई दुःख दिने कार्यको पछि लाग्दछन् (अर्थात् नराम्रा काम गर्दछन्) अतः तिमी त्यस्ता व्यक्तिहरूको मद्दत गर्दैनौ।" (ऋग्वेद ८-२१-१४)

यस्तै जुवाको बारेमा ऋग्वेदमा भनिएको छ - "जुवा खेल्ने व्यक्तिको श्वासले त्यसलाई सराप्छ र उसको पत्नीले पनि उसलाई छोडेर जान्छे। जुवाडेलाई कसैले एउटा फुटेको कौडि पनि उधारो दिन चाँहदैन।" (ऋग्वेद १०-३४-३)

यसपछि लगातार तेस्रो मन्त्रदेखि १३ औं मन्त्रसम्म जुवाको हानी र यसबाट समाजमा पर्ने नराम्रो असरको बारेमा वर्णन गरिएको छ र १३ औं मन्त्रको अन्तमा यसरी भनिएको छ- "हे जुवाडे ! जुवा खेल्न छाडी कृषि पेशा अँगाल यसमा जुन नाफा छ त्यसैमा सन्तुष्ट रहने गर"। (ऋग्वेद १०-१०-१३)

# केही सामान्य जिज्ञासा तथा तिनका समाधान

## १. के ईश्वर निष्पक्ष तथा न्यायपूर्ण छन् ?

यदि ईश्वर निष्पक्ष र न्यायी छन् भने किन त कोही मानिसहरूको जन्म सामान्य रूपमा हुन्छ भने कोहीको असामान्य (खराबी) रूपमा, कोही सम्पन्न परिवारमा त कोही विपन्न परिवारमा जन्मन्छन् ?

**समाधानः** मृत्युपछिको जीवनमा हरेक व्यक्तिले आफ्नो कर्म अनुसारको फल प्राप्त गर्नेछन् । अतः त्यस जीवनको निम्ति वर्तमान जीवन केवल एक परीक्षा हो । यस कथनको पुष्टि कुरआनको सूरह मुल्क, अध्याय ६७, श्लोक २ ले गर्दछ -

"उनले मृत्यु र जीवनको सृष्टि गरे जसले गर्दा उनले तिम्रो परीक्षा लिउन् कि तिमीमध्ये कसले असल कार्य गर्नेछ र 'उनी' प्रभुत्वशाली र क्षमाशील छन्" ।

**अल्लाहले विभिन्न तरीकाबाट मानिसहरूको परीक्षा लिने गर्दछन् ।**

उदाहरणको रूपमा लिऔं, हरेक वर्षको परीक्षाको प्रश्न पत्र एकैनास नभई परिवर्तन हुने गर्दछ । त्यसैगरी अल्लाहले पनि विभिन्न परिस्थितिहरूको सिर्जना गरी आफ्ना भक्तहरूको परीक्षा लिने गर्दछन् । कसैले स्वास्थ्य र सुन्दर शरीर पाउँछन् त कोही अपाङ्ग भइ जन्मन्छन् । कोहीले प्रशस्त धन, सम्पत्ति प्राप्त गर्दछन् त कोही गरीबी मै जीवन बिताउन बाध्य हुन्छन् ।

**ईश्वरीय निर्णय (फैसला) परीक्षाको किसिम र कठिनाइमा आधारित रहने छ ।**

अल्लाहको फैसला हरेक व्यक्तिले प्राप्त गरेका सुविधा तथा गुणहरूमा निर्भर हुने गर्दछ । परीक्षा कठिन भएको खण्डमा फैसलाको दिन अल्लाह त्यस व्यक्तिप्रति उदार अनि कोमल हुनेछन् । उदाहरणका लागि इस्लाममा 'जकात' (दान) अनिवार्य गरिएको छ । तर एक निर्धन (गरिब) व्यक्तिले जकात दिनुपर्ने आवश्यकता छैन । जकातको विषयमा सो व्यक्तिले पूर्ण अङ्क(पुण्य) प्राप्त गर्दछ भने धनी तथा सम्पन्न व्यक्तिहरूमा यो लागू हुँदैन । उसले अनिवार्य रूपले जकात दिनुपर्ने हुन्छ । कतिपय सम्पन्न व्यक्तिहरूले जति जकात दिनुपर्ने हो सो भन्दा कम दिने गर्दछ जसबाट जकातको विषयमा कम अङ्क (पुण्य) प्राप्त गर्दछ । त्यस्तै

'हज' (तीर्थ) जीवनमा एक पटक अनिवार्य रूपले सक्षम (आर्थिक र शारीरिक रूपले) मुसलमानहरूमाथि फर्ज (अनिवार्य) गरिएको छ । अतः आर्थिक र शारीरिक रूपले सक्षम मुसलमानले आफ्नो जीवनकालमा हज नगरेको खण्डमा यस विषयमा पूर्ण अङ्क प्राप्त हुँदैन । तर असक्षम मुसलमानलाई हज गर्नुपर्ने अनिवार्य छैन । अतः हजको विषयमा सो व्यक्तिले (हज नगरे पनि) पूर्ण अङ्क प्राप्त गर्दछ ।

केही मानिसहरू जन्मदै विभिन्न कमी, कमजोरीका साथ जन्मेका हुन्छन् जस्तै, अन्धो, बहिरो, अपाङ्ग आदि । ती जन्मने नवजात शिशुहरू यस्ता कमी-कमजोरीहरू प्रति जिम्मेदार हुँदैनन् । यस्तो अवस्थामा हुन सक्छ अल्लाहले तिनका अभिभावकहरूको परीक्षा लिइरहेका हुन् ।

अल्लाहले कुरआनको सूरह अन्फाल, अध्याय ८, श्लोक २८ मा भनेका छन्,

''र जानी राख कि तिम्रा सम्पतिहरू र तिम्रा सन्तानहरू परीक्षा स्वरूप हुन् र यो कि अल्लाहसँग ठूलो प्रतिदान रहेको छ ।''

## ९. के राम तथा कृष्ण ईश्वरका सन्देष्टा हुन् ?

**समाधानः** हरेक राष्ट्रमा सन्देष्टाहरू पठाइए । पवित्र ग्रन्थ कुरआनमा भनिएको छः

"र कुनै समूह यस्तो छैन, जहाँ सचेत गर्ने कोही नआएको होस्" । (३५:२४)

''र हरेक जातिको लागि एक मार्गदर्शक आए'' । (१३:७)

कुरआनमा केही सन्देष्टाहरूको मात्र वर्णन गरिएको छ, सो कुराको पुष्टि कुरआनको यस श्लोकले गर्दछ ।

''केही 'सन्देष्टा' छन् जसको वृत्तान्त हामीले पहिले तिमी समक्ष बयान गरी सक्यौं र केही 'सन्देष्टा' छन् जसको वृत्तान्त हामीले तिमी समक्ष बयान गरेनौं'' । (४:१६४)

यस्तो कुरआनको अर्को श्लोकमा भनिएको छ, ''र मैले तिमीभन्दा पहिले पनि 'सन्देष्टा' पठाइ सकें, जसमध्ये केही यस्ता छन् जसको वृत्तान्त हामीले तिमीलाई सुनायौं र केही यस्ता छन् जसको वृत्तान्त हामीले सुनाएका छैनौं ।" (४०:७८)

कुरआनमा ईश्वशहरका २५ सन्देष्टाहरूको नाम सहित वर्णन गरिएको छ, जसमध्ये केही आदम (अ.) नुह (अ.), इब्राहीम (अ.), मुसा (अ.), ईसा (अ.) तथा मुहम्मद (स.) आदि हुन् ।

अन्तिम सन्देष्टा मुहम्मद (स.) का अनुसार लगभग १,२४,००० सन्देष्टाहरू यस धर्तीमा पठाइए ।

मुहम्मद (स.) भन्दा पूर्व आगमन भएका सबै सन्देष्टाहरू केवल केही समुदायका निमित्त र एक निश्चित समयका लागि मात्र पठाइएका थिए । सुरह आलेः इमरान, अध्याय ३, श्लोक ४९ अनुसार - "र 'इजराइल' का सन्तान तर्फ 'सन्देष्टा' बनाएर पठाइनेछ" ।

मुहम्मद (स.) ईश्वरका तर्फबाट अन्तिम तथा निर्णायक सन्देष्टा हुन् ।

सूरह अहजाब, अध्याय ३३, श्लोक ४० मा भनिएको छ, "मुहम्मद तिम्रा पुरूषहरूमध्ये कसैका पनि पिता होइनन् परन्तु उनी अल्लाहका रसूल तथा सन्देष्टाहरूका समापक हुन् र अल्लाह हरेक चीजका ज्ञाता हुन्" । (३३:४०)

सन्देष्टा मुहम्मद (स.) अन्तिम तथा निर्णायक सन्देष्टा हुन, उनी केवल मुसलमानहरू अथवा अरबबासीहरूका निम्ति मात्र नभइ सम्पूर्ण मानवजाति कै निम्ति पठाइएका हुन् ।

सूरह अम्बिया, अध्याय २१, श्लोक १०७ मा अल्लाहले भनेका छन्, "र (हे मुहम्मद) हामीले तिमीलाई सारा संसार कै निम्ति दया बनाए पठाएका छौं ।"

त्यस्तै सूरह सबा, अध्याय ३४, श्लोक २८ मा भनिएको छ, "र हामीले त तिमीलाई समस्त मानव जातिका लागि शुभ सूचक र सचेतक बनाएर पठाएका छौं, तर अधिकांश व्यक्तिहरूलाई यसको ज्ञान छैन" ।

सहीह बुखारी, भाग १, सलाह, अध्याय ५६, हदिस नं. ४२९ (अनुवादक जाबिर बिन अब्दुल्लाह): अल्लाहका सन्देष्टाले भन्नु भएका थिए -

"हरेक सन्देष्टाहरू केवल आफ्नै राष्ट्रका निम्ति पठाइए तर म (मुहम्मद) सम्पूर्ण मानवजाति कै निम्ति पठाइएको हुँ" ।

के राम र कृष्णलाई ईश्वरका सन्देष्टा मान्न सकिन्छ भन्ने प्रश्नको सम्बन्धमा कुरआन तथा सहीह् हदिसमा यस्तो कुनै श्लोक वा लेख छैन जसमा नेपाल र भारतमा भनि पठाइएको सन्देष्टाको नाम वर्णन गरिएको होस् । राम र कृष्ण नाम

सहितको वर्णन नभएको हुँदा कसैले पनि किटानका साथ उनीहरू ईश्वरका सन्देष्टाहरू नै हुन् वा होइनन् भनी भन्न सक्दैन ।

राम तथा कृष्ण, यदि ईश्वरका सन्देष्टाहरू भएकै भए पनि एक निश्चित समयावधिका लागि सीमित रहे । आज विश्वका हरेक मानवजातिले केवल अन्तिम तथा निर्णायक सन्देष्टा मुहम्मद (स.) कै अनुसरण गर्नुपर्दछ । कुरआन तथा सहीह् हदीसको निर्देशन अनुरुप नै जीवन व्यतित गर्नुपर्दछ ।

## ३. के वेदहरू पनि ईश्वरकै (अल्लाहकै) प्रकाशना हुन्, नेपाल तथा भारतका निम्ति कुन प्रकाशना पठाइयो ?

यदि मुहम्मद स. ईश्वर (अल्लाह)का अन्तिम सन्देष्टा तथा कुरआन उनीमाथि अवतरित अन्तिम ग्रन्थ हुन् भने यस अघि पठाइएका सन्देष्टा तथा ईश्वरका प्रकाशना बारे कुरआन के भन्दछ ?

**समाधानः** कुरआनले हरेक युग, जाती तथा समूहमा सचेत गर्ने कोही पठाइएको तथा उनीहरूमाथि ईश्वरीय प्रकाशना अवतरित भएको कुराको पुष्टि गर्दछ ।

पवित्र ग्रन्थ कुरआनको सूरह अल-रअ्द, अध्याय १३, श्लोक ३८ मा भनिएको छ, "प्रत्येक युगको लागि एउटा किताब (अवतरित गरियो)" ।

नाम सहित चार अवतरित ग्रन्थहरू कुरआनमा वर्णन गरिएका छन्, ती हुन्:

तौरात - हजरत मूसा (अ.) माथि अवतरित ग्रन्थ

जबूर - हजरत दाउद (अ.) माथि अवतरित ग्रन्थ

इन्जील(बाइबल)- हजरत ईसा (अ.) माथि अवतरित ग्रन्थ

कुरआन - अन्तिम सन्देष्टा मुहम्मद (स.) माथि अवतरित अन्तिम र पूर्ण ग्रन्थ

कुरआनभन्दा अगाडिका प्रकाशनाहरू एक निश्चित समय, निश्चित समूहका लागि मात्र अवतरित भएका ग्रन्थहरू हुन् । तर अन्तिम प्रकाशना 'कुरआन' सम्पूर्ण मानवजाति कै निम्ति अवतरित ग्रन्थ हो । अर्थात यो ग्रन्थ केवल मुसलमान वा अरब देशका बासिन्दाहरूका निम्ति मात्र नभई सम्पूर्ण मानवजाति कै निम्ति अवतरित ग्रन्थ हो । सो कुराको पुष्टि पवित्र कुरआनका यी विभिन्न अध्याय तथा श्लोकहरूले गर्दछ ।

क)	सूरह इब्राहीम, अध्याय १४, श्लोक १

"अलिफ, लाम, रा. । (हे मुहम्मद) यो एक किताब हो जसलाई हामीले तिमीमाथि अवतरित गरेका छौं ताकि तिमी मानिसहरूलाई उनीहरूका 'पालनहार' को अनुमतिद्वारा अँध्यारोबाट निकालेर उज्यालो तर्फ लिएर आऊ......।"

ख)	उस्तै भनाइ सोहि अध्यायको श्लोक ५२ मा रहेको छ -

"यो मानवका निम्ति पर्याप्त सन्देश हो ताकि तिनीहरू यसबाट सावधान गरिउन् र तिनीहरूले जानकारी पाउन् कि उनी (अल्लाह) केवल एक ईश्वर हुन्, ताकि बुद्धिमानहरू सावधान होऊन् ।"

ग)	सूरह बकरह्, अध्याय २ श्लोक १८५ -

" 'रमजान' को महिना त्यो महिना हो जसमा कुरआन मानवहरूका निम्ति मार्गदर्शन र सत्य-असत्य बीचको अन्तरको स्पष्ट प्रमाणहरूका साथ अवतरित गरियो ।"

घ)	सूरह जुमर, अध्याय ३९, श्लोक ४१ -

" (हे नबी ! ) हामीले तिमीमाथि यो 'किताब' मानवहरूकालागि हकको साथ अवतरित गरेका हौं ।"

कुरआन तथा सहीह् हदीसमा त्यस्तो कुनै अध्याय छैन जसमा नेपाल वा भारतका निम्ति भनी उतारिएका प्रकाशनाबारे वर्णन गरिएको होस् । यस्तै प्रकारले कुरआन र सहीह् हदीसमा वेद तथा अन्य हिन्दू ग्रन्थहरूको वर्णन नगरिएको हुँदा यी ग्रन्थहरू ईश्वरीय प्रकाशना नै हुन् वा होइनन् भन्ने कुरा यकीनका साथ भन्न सकिँदैन ।

यदि वेद तथा अन्य ग्रन्थहरू ईश्वरीय प्रकाशना नै थिए भने पनि ती ग्रन्थहरू एक निश्चित समय तथा समूहका लागि सीमित रहे । आज नेपाल, भारत लगायत पुरै विश्वका मानवजातिले अन्तिम तथा निर्णायक ईश्वरका प्रकाशना 'कुरआन' कै अनुसरण गर्नु नै लाभदायक हुनेछ । धेरैजसो पूर्व प्रकाशनाहरू अनन्तकालसम्मका लागि अनुसरण गरिने उद्देश्य रहेको थिएन जसले गर्दा ती प्रकाशनाहरू ईशवाणी नै भए तापनि त्यसको रक्षा कसैबाट पनि हुन सकेन, न त स्वयं ईश्वरले नै त्यसको रक्षा गरे । यस्तो एउटा पनि धार्मिक ग्रन्थहरू बाँकी छैनन् जुन ईशवाणी नै भए तापनि त्यसको मौलिक रचनामा कुनै पनि परिवर्तन, मिलावट तथा थपघट भएको छैन भनी दाबी गर्न सकियोस् । तर पवित्र ग्रन्थ कुरआन

अनन्तकालसम्मकै निम्ति अवतरित ग्रन्थ हो, अल्लाह (ईश्वर) स्वयंबाट नै यस ग्रन्थ 'कुरआन' को मौलिकताको रक्षा हुनेछ । पवित्र कुरआनको सूरह हिज्र, श्लोक ९ मार्फत अल्लाह स्वयं ले सो कुराको पुष्टि यसरी गरेका छन् - ''निस्सन्देह यो 'कुरआन' हामीले अवतरित गरेका हौं र निस्सन्देह हामी नै यसका रक्षक हौं ।'' (१५:९)

## ४. के मन एकाग्रताको निमित्त मात्र मूर्तिको प्रयोग जरूरी छ ?

वेद शास्त्रीहरू हिन्दू धर्ममा पनि मूर्ति पूजालाई निषेधित गरिएको कुरामा सहमत छन् । त्यसो भए मूर्ति पूजाको प्रयोग किन गरिन्छ वा गराइन्छ ?

**समाधानः** हिन्दू विद्वानहरू तथा पण्डित वेदहरू तथा अन्य हिन्दू धर्मग्रन्थहरूमा मूर्ति पूजालाई निषेध गरिएको कुरामा सहमत छन् । तर पनि आरम्भमा मन (बुद्धि) परिपक्व भइसकेको हुँदैन त्यसैले उपासना गर्दा कुनै पनि किसिमका मूर्तिहरूको प्रयोग गरिन्छ । जब मन तथा मस्तिष्क परिपक्व भइ चेतनामा अभिवृद्धि हुन्छ तब मूर्तिको आवश्यकता हुँदैन ।

तर यदि उपासनाको आरम्भको अवस्थामा मात्र मूर्तिको आवश्यकता पर्ने र जब मन तथा मस्तिष्क परिपक्व भइ चेतनाको उच्चतम विन्दुमा पुग्छ तब यसको आवश्यकता नपर्ने हो भने यस विषयमा यो भन्न सकिन्छ कि मुसलमानहरू उपासना तथा चेतनाको उच्चतम विन्दुमा पुग्न सफल भइसकेका छन् किनभने अल्लाहको उपासना (नमाज पढ्दा) गर्दा कुनै पनि किसिमका मूर्ति तथा प्रतिमाहरूको आवश्यकता हुँदैन ।

एक स्वामीसँग यस विषयमा छलफल गर्ने क्रममा उनले भने कि जब हाम्रो बालकले 'बादल किन गर्जन्छ' भनी सोद्धछ तब हामी 'स्वर्गमा हजुरआमा गहुँ पिस्दै हुनुहुन्छ' भन्ने जवाफ दिन्छौं किनभने बालकहरूका मन तथा मस्तिष्क यस्ता कुराहरू बुझ्नका निम्ति परिपक्व भइसकेका हुँदैन । यसैगरी प्रारम्भिक अवस्थामा उपासनाका निम्ति मूर्तिको आवश्यकता पर्दछ ।

इस्लाममा झुठ बोल्न सख्त मनाही गरिएको छ । चाहे त्यो झुठ क्षणिकको लागि नै किन नहोस् । यदि मेरो सन्तानले मसँग कुनै प्रश्न गरेको खण्डमा म उसलाई कदापि झुठो जवाफ दिनेछैन किनभने भविष्यमा जब उसले विद्यालयबाट 'वायुमा द्रुतगतिले ताप प्रसारित हुँदा, विजुली चम्कन गई उक्त गर्जनको आवाज उत्पन्न गर्दछ' भन्ने शिक्षा ग्रहण गर्दछ, तब ऊ अन्योलमै यो सोच्न बाध्य हुन्छ कि कसको कुरा सही अनि कसको गलत हो । यस्तो परिस्थितिले बालकको कलिलो

मन तथा मस्तिष्कलाई नकारात्मक असर पार्दछ। पछि जब त्यस बालकले सत्यता थाहा पाउनेछ तब उसको मनले आफ्नै अभिभावकलाई नै दोषी मान्नेछ। यदि कुनै बालकलाई बुझ्न गाह्रो हुने जवाफ दिनुपरेको खण्डमा काल्पनिक जवाफ दिएर उसको मुख बन्द गर्नुभन्दा सरल भाषामा सम्भव भए उदाहरण प्रस्तुत गरी बुझाउने प्रयत्न गर्नु पर्दछ। यदि तपाईंलाई जवाफ थाहा छैन भने 'मलाई थाहा छैन' भनी सत्य प्रकट गर्नु नै उचित हुन्छ। तर पनि यस्तो परिस्थितिको सिर्जना हुनुभन्दा पहिले नै तपाईं स्वयं सत्य ज्ञान हासिल गर्नुहोस् र आफ्ना सन्तानलाई पनि केवल सत्य जानकारी मात्र प्रदान गर्नु नै एकमात्र समस्याको समाधान हो। इस्लामले सदैव, सत्य-तथ्य ज्ञान हासिल गर्न अनि धर्म र कर्म सम्बन्धि आवश्यक शिक्षा तथा तालिम प्राप्त गर्नमा विशेष जोड दिइएको छ।

केही पण्डितहरूले मूर्ति पूजाबारे मलाई आश्वस्त पार्ने क्रममा भने कि तल्लो कक्षाका विद्यार्थीलाई आरम्भमा उपासनाको निम्ति मूर्ति पूजाको शिक्षा दिइन्छ तर त्यो विद्यार्थी जब माथिल्लो तहमा प्रवेश गर्दछ तब उपासनामा मन एकाग्रताको निम्ति मूर्तिको आवश्यकता हुँदैन।

एउटा महत्वपूर्ण कुरा के हो भने कुनै पनि विषयको आधार मजबुत रहेमा मात्र त्यसले भविष्यमा सफलता प्राप्त गर्दछ। जस्तैः कक्षा १ का विद्यार्थीलाई २+२= ४ हुन्छ भनी अध्ययन गराइन्छ र जब उसले स्नातक तह उत्तीर्ण गर्दछ, गणित विषयमा २+२= ४ हुन्छ भन्ने शिक्षा यथावत रहन्छ, त्यो परिवर्तन भइ ५ वा ६ हुँदैन।

त्यसैगरी गणितका अतिरिक्त अन्य विषयहरू जस्तै तथ्याङ्क शास्त्र आदिको अध्ययन गर्दा पनि आधार उही नै रहन्छ। यदि आरम्भ मै शिक्षक शिक्षिकाले गलत शिक्षा दिन्छन् भने त्यस्ता विद्यार्थीहरूको सफलताको कसरी अपेक्षा गर्न सकिन्छ ?

सबै वेदहरूको आधारभूत सिद्धान्त यो रहेको छ कि ईश्वर एक छन् र उनका कुनै स्वरूप छैन। यस तथ्यको ज्ञान हुँदा पनि कसरी वेदशास्त्रीहरूले यस सत्यलाई व्यक्त नगरी मानिसहरू माझ गलत शिक्षाको प्रचार प्रसार अनि अभ्यास गरे गराए।

के तपाईं कक्षा एकमा अध्ययनरत आफ्नो सन्तानलाई २+२= ४ हुन्छ नभनी ५ वा ६ हुन्छ भन्ने शिक्षा दिनुहुन्छ र उसले स्कूलको शिक्षा पूर्ण गरेपछि मात्र सो बारे पुष्टि गर्नुहुन्छ ? यदि उसले गल्ति गर्दछ भने तपाईंले अवश्य पनि त्यसलाई तत्कालै सच्याइदिनु हुनेछ न कि भविष्यमा आफैं जान्नेछ भनी प्रतिक्षा गर्नुहुनेछ। (डा. जाकिर नाइक)

## ५. मुस्लिमहरुले काबाको उपासना किन गर्छन ?

केही गैर-मुस्लिमहरूको जिज्ञासा रहेको छ कि मुस्लिमहरू किन काबा तिर फर्केर प्रार्थना गर्ने अनि ढोक्ने गर्दछन्, जबकि उनीहरू मूर्ति पूजाको विरूद्ध छन् ?

**समाधानः** काबा केवल एक दिशा निर्देशक (किब्ला) हो। मुसलमानहरूले नमाजमा काबातिर फर्केर प्रार्थना गर्ने अनि ढोक्ने कुरा सही हो । तर वास्तविकता यो हो कि नमाजमा (प्रार्थनामा) काबाको प्रार्थना गरिदैन किनकी काबा केवल एक दिशा निर्देशक हो जस तर्फ फर्केर नमाज पढिन्छ र (सज्दा) ढोगिन्छ। यो प्रार्थना र ढोग केवल एक अल्लाहको निमित्त मात्र हो। इस्लामले सदैव एकतामाथि विश्वास राख्दछ। जस्तै यदि केही मुसलमानहरू नमाज पढ्न चाहन्छन् तर कुन दिशा तर्फ फर्केर नमाज पढ्ने हो भन्ने कुराले अन्यौल सिर्जना गर्दछ। कसैले भन्न सक्छ उत्तर तर्फ फर्केर नमाज पढौं, कसैले दक्षिण तर्फ, त्यस्तै कसैले पूर्व, त कसैले पश्चिम।

यसरी मुसलमानहरूमा अन्यौलको वातावरण सिर्जना नहोस् र सदैव एकता कायम रहोस् भन्ने उद्देश्यले विश्वका सारा मुसलमानहरूलाई काबा तर्फ फर्केर नमाज पढ्न भनिएको हो। यदि उनीहरू पश्चिममा छन् भने पूर्वतर्फ फर्केर नमाज पढ्छन्, यदि पूर्वमा छन् भने पश्चिम तर्फ, आदि ।

### काबा – पृथ्वीको केन्द्र विन्दु

विश्वको मानचित्र तयार गर्ने पहिलो व्यक्ति मुसलमान थिए। ती व्यक्तिले माथिपट्टि दक्षिण ध्रुव र मुनिपट्टि उत्तरी ध्रुव पारी नक्शा कोर्दा काबा पृथ्वीको मध्य भागमा रहेको पाइयो । पछि केही पश्चिमेलीहरूले माथिपट्टि उत्तरी ध्रुव र मुनिपट्टि दक्षिणी ध्रुव पारी नक्शा तयार गर्दा पनि अल्हम्दु लिल्लाह काबा पृथ्वीको केन्द्र बिन्दूमा नै रहेको पाइयो। यसरी कावा पृथ्वीको केन्द्र विन्दु भएको प्रमाणित भयो।

### एक ईश्वरको संकेत प्रदान गर्नको निमित्त काबाको परिक्रमा गरिन्छ –

जब मुसलमानहरू मक्काको मस्जिद-ए-हराममा जान्छन् तब काबाको परिक्रमा गर्दछन् । जसरी हरेक गोलाकार (Circle) का एक मात्र केन्द्र विन्दु हुन्छ त्यसरी नै उपासनाको निमित्त केवल एक ईश्वर (अल्लाह) मात्र योग्य छन् र कावा मात्र केन्द्र बिन्दुको रुपमा रहेको छ। अरबको मक्का शहरमा अवस्थित काबाको बिषयमा कुरआन भन्दछ- "निस्सन्देह (उपासनाको लागि) पहिलो घर जुन मानिसहरुका लागि निर्धारित गरिएको थियो, त्यो मक्कामा रहेको छ, यो सम्पूर्ण संसारबासीहरुका लागि मंगलमय तथा मार्गदर्शक हो।" (३:९६)

# निष्कर्ष

ईश्वरका अन्तिम ईशदूत मुहम्मद (स.) माथि ४० वर्षको उमेरमा ईशवाणी अवतीर्ण हुने क्रमको शुरूवात भयो । फेरी २३ वर्षसम्म समय समयमा ईश्वरका तर्फबाट जुन सन्देशहरू उनीमाथि अवतरित भइरहे त्यसैको संग्रहको नाम नै 'कुरआन' हो । कुरआनको अन्तिम श्लोक वा पंक्ति जुन हजरत मुहम्मद (स.) स्वर्गारोहण हुनुभन्दा केही समय पूर्व उहाँमाथि अवतरित भएको थियो त्यो यस्तो छ,

'आज हामीले तिम्रालागि तिम्रो धर्मलाई पूर्ण गरिदियौं र तिमीमाथि आफ्नो वरदान पूरा गरिदियौं र हामीले तिम्रा लागि "सम्पूर्ण आत्म समर्पण" ( 'इस्लाम') को धर्मलाई रोज्यौं" । (५:३)

इस्लामलाई सही अर्थमा नबुझेका कारणले गर्दा गैर मुसलमानहरू मात्र नभई केही मुसलमानहरू स्वयं पनि यस भ्रममा परेका छन् कि इस्लाम केवल १४२९ वर्ष पुराना धर्म हो । अर्थात इस्लाम सबै धर्महरूभन्दा अन्तमा आएको तथा एक नयाँ र नौलो धर्म हो । जुन कुरा पूर्णत गलत हो । कुरआनले इस्लाम नयाँ धर्म नभएको तथा यस संसारमा प्रारम्भदेखि नै केवल एउटै धर्म (एकेश्वरवाद) को स्थापना भएको र सोही धर्मलाई नै अन्तिम पटकका लागि पूनः स्थापित गर्नका लागि अन्तिम ईशदूत मार्फत कुरआनको अवतरण गरिएको कुराको पुष्टि गर्दछ ।

यदि इस्लाम नौलो धर्म भइदिएको भए कुरआनले बारम्बार पूर्व अवतरित ग्रन्थहरूमाथि पनि विश्वास राख्नु पर्ने आदेश किन दिन्थ्यो ? मनुष्यका मार्गदर्शनका लागि ईश्वरको सन्देश आउने क्रमको शुरूवात त पृथ्वीमा पहिलो मानव 'आदम'बाट शुरू भइसकेको थियो । आदम (अ.) माथि जुन ईशवाणी अवतरित भएको थियो त्यही सन्देश नै समय-समयमा पृथ्वीको प्रत्येक भागमा, प्रत्येक युगमा जन्म लिएका ईशदूतहरूमाथि पनि अवतरित भइरहे, जसको अन्त मुहम्मद (स.) माथि अवतरित उक्त श्लोक (५:३) मा भएको छ । यो पुरै एक श्रृखंला हो जसको अन्त मुहम्मद (स.) मा हुन गएको छ । कुरआनको माथि उल्लेखित पंक्तिका विषयमा श्री मालिक राम लेख्दछन् -

"यसको अर्थ यो मात्र होइन कि 'हे मुसलमानहरू ! मुहम्मद ईशदूत (स.) ले ल्याएको धर्म इस्लाम आज पूर्ण भएको छ" बरू यस पंक्तिद्वारा यो घोषणा गर्नुपर्ने पनि थियो कि त्यो 'इस्लाम' को शिक्षा जुन आदम (अ.) को समयबाट

संसारका विभिन्न जातिहरूलाई प्रदान गरिदै आइयो त्यो आज पूर्ण भएको छ। अर्थात (ईश्वरका तर्फबाट) मार्ग दर्शक पुस्तकको यो (कुरआन) अन्तिम संस्करण (Edition) हो।'' (इस्लामियात, नयाँ दिल्ली)

प्रत्येक मुसलमानले सबै पूर्व अवतरित ग्रन्थहरूमाथि पनि आस्था राख्न अनिवार्य छ, तब मात्र उनीहरू आत्मसमर्पण (इस्लाम) धर्म भित्र रहने छन्। कुरआनले 'सत्धर्म' तिनै कुराहरूलाई बताएको छ जुन समस्त ईश्वरीय ग्रन्थहरूमा रहेका छन्। कुरआन ती सबैको संग्रह हो र सोही सनातन धर्मलाई नै स्थापित गर्ने आदेश ईश्वरले कुरआन मार्फत मानव मात्रलाई दिएका छन्।

ईश्वरले क्रमशः जुन धर्मलाई प्रेषित गरे मानवजातिले त्यसलाई अनेकौं समूहहरूमा विभाजित गरिदिएका छन्। विभिन्न जातिहरूले धर्मका विभिन्न भागहरूबाट बनेका धर्मलाई नै सम्पूर्ण मानेर आफ्नोलागि पर्याप्त ठानेका छन्। यसप्रकार स्वयं मनुष्यहरू स-साना समूहमा विभाजित भएका छन्। हरेक धार्मिक जातिले कुनै एक ईशदूतद्वारा ल्याइएको ग्रन्थलाई मान्न अस्वीकार गरेका छन्। विभाजनको यस दुर्भाग्यपूर्ण अवस्था यहाँसम्म सीमित रहँदैन। हरेकले जुन-जुन ग्रन्थलाई आफ्नो धर्मको आधार मानेका थिए त्यसबाट पनि उनीहरू हटिसकेका छन्। वैदिक धर्म मान्नेहरू 'वेद' बाट टाढिए, यहुदी तथा ईसाई 'तौरेत' र 'इन्जील' बाट हटेका छन् अनि कर्मयोगमा 'कुरआन' का अनुयायीहरूका जीवनबाट कुरआन टाढिन थालेको छ। मूल धर्मका यी भागहरूमा पनि त्यसका अनुयायीहरू कायम रहन सकेनन्।

सारंशमा भन्नुपर्दा वेद र कुरआनले दिने मूल सन्देश एक नै हुन्। प्रारम्भिक सत्धर्म अर्थात आदममार्फत स्थापित धर्ममा पछि गएर अनेकौ कमीहरू देखा परे। अतः उही प्राचीन धर्मलाई नै स्थापित गर्नका लागि हजरत नूह (अ.) यस लोकमा आए। त्यसपछि उनै सृष्टिकर्ताको इच्छास्वरुप हजरत मूसा (अ.) धर्मग्रन्थ "तौरेत" का साथ आए। हजरत ईसा (अ.) पनि "इन्जील" मार्फत त्यही सन्देश लिएर आए तथा अन्तमा हजरत मुहम्मद (स.) "कुरआन" का साथ अन्तिम पटक कुनै नयाँ र नौलो धर्म नभई उही (एकेश्वरवादको) धर्मलाई स्थापित गर्नको लागि आए। के एक ईश्वरको इच्छा प्रत्येक युग, समय, काल, परिस्थिति अनुसार बदलिरहन सक्ला? यो असम्भव छ किनकी मूल मान्यताहरू एकै छन्। फेरी के यो सम्भव हुन सक्ला कि आदि कालमा पृथ्वीमा वैदिक धर्मको स्थापना भयो, हजरत मूसा (अ.) ले हजारौं वर्षपछि आएर उनीहरूलाई यहूदी बनाई दिए, हजरत

ईसा अ. ले पुन उनीहरूलाई ईसाई बनाई दिए तथा अन्तमा हजरत मुहम्मद (स.) ले मुसलमान बन्नका लागि भने ? यस्तो हुनै सक्दैन । यी सबै ईशदूतहरूले ल्याएका सन्देशहरूको अर्थ नबुझेका कारणले गर्दा हामीबाट अवश्य नै ठूलो भूल भइरहेको छ । फलस्वरुप एकै जोडी आदम तथा हव्वाका सन्तानहरू हामीमा मतभेदको सिर्जना भई दिनानुदिन स-साना समूहमा अलग्गिदैँ गइरहेका छौं । यी सबै ईशदूतहरू ईश्वरका नै दूत हुन् तथा यिनीहरू सत्यवादी थिए भन्ने कुरालाई कुरआनले यसरी स्पष्ट गर्दछ,

"अल्लाहले तिमीहरूका लागि त्यही धर्म निर्धारित गरेका छन् जसको आदेश उनले नुहलाई दिएका थिए । अनि जसको प्रकाशना (हे मुहम्मद )हामीले तिमीतर्फ गरेका छौं र जसको आदेश हामीले इब्राहीम, मूसा तथा ईसालाई दिएका थियौं कि धर्मलाई स्थापित गर र यसमा मतभेद नगर" ।

कुरआन अझ अगाडि भन्दछ- "सम्पूर्ण मानव एउटै समुदाय हुन् । अनि तिनीहरूले विभेद गरे ।"

ती सबै ईशदूतहरूले दिएका शिक्षा एकै हुन् । विभिन्न युग ,वंश तथा जातिमा जन्मेका हुँदा सो धर्मको नाम पक्कै पनि सबैले आ-आफ्नै भाषामा बताएका छन् । उही प्राचिन तथा एकै धर्मको (सत्धर्मको) नाम कुरआनले अरबी भाषामा "इस्लाम" बताएको छ । यही इस्लाम धर्मको नाम कुरआन सनातन धर्म (दीन-ए-कय्यिम) बताउँदछ (३०:४३) । कुरआन यसको नाम 'शाश्वत धर्म' (दीन-ए-कय्यिम) भन्दछ (१८:५) । हजरत मुहम्मद (स.)ले कुरआनकै धर्मलाई 'स्वधर्म' तथा 'स्वभाव नियत कर्म' (दीन-ए-फित्रत) बताउँदछन् ।

समस्त ईशदुतहरू तथा समस्त धार्मिक आयामहरूको विश्लेषणबाट नै सत्यमार्गको पहिचान गर्न सक्ने कुरालाई स्वीकार्नु पर्दछ । त्यसैले इस्लाम कुनै नयाँ तथा नौलो धर्म नभई उही प्राचिन धर्म (सत्धर्म) नै हो । यही धर्म नै वास्तविक ईश्वरले रोजेको मार्ग हो । तसर्थ यस मार्गबाट नै लौकिक तथा पारलौकिक जीवनको सफलता प्राप्त गर्न सकिन्छ ।

"......... हे मानव तिमीहरूको यो विद्रोह तिम्रै थाप्लोमा परिरहेको छ । सांसारीक जीवनको थोरै दिनको आनन्द लेऊ फेरी हामीतर्फ नै फर्केर आउनु छ अनि तिमीहरूले जे जति गर्ने गरेका थियौ हामी तिमीहरूलाई अवगत गराउने छौ" ।

कुरआन (१०:२३)

# सन्दर्भ सामग्रीहरु

१. डा. जाकिर नाइक (प्रवचन तथा वक्तव्यहरु)

२. Hinduism & Islam
A Comparative Study - Murtahin Billah Fazlie

३. अन्तिम सन्देष्टा - आचार्य सखर नदवी

४. मुहम्मद (स.) धर्म ग्रन्थहरुमा - डा. एम.ए. श्रीवास्तव

५. इस्लाममा नारी - हिफजुर्रहमान

६. अवतारवाद और रिसालत- डा. मोहम्मद अहमद

७. Muhammad in Parsi, Hindoo and Buddhist Scriptures - A.H. Vidyarthi and U. Ali

८. ऋग्वेद, यजुर्ववेद, सामवेद तथा अथर्ववेद (नेपाली अनुवाद) - तिलक प्रसाद लुईंटेल

९. वेद और कुरआन, फैसला करते हैं - एस. अब्दुल्लाह तारीक

१०. इस्लाम दर्शन - मौलाना सैय्यद अबूल आला मौदूदी

११. अन्य